# सवारी तथा यातायात व्यवस्था ऐन, २०४९

प्रमाणीकरण र प्रकाशन मिति

२०४९।९।२२

**संशोधन गर्ने ऐन**

| | | |
|---|---|---|
| १. | सवारी तथा यातायात व्यवस्था (पहिलो संशोधन) ऐन, २०५० | २०५०।५।९ |
| २. | सार्वजनिक खरिद ऐन, २०६३ | २०६३।९।३० |
| ३. | गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६६[◎] | २०६६।१०।७ |

२०४९ सालको ऐन नं. ४५

**सवारी तथा यातायात व्यवस्था सम्बन्धी कानूनी व्यवस्था गर्न बनेको ऐन**

**प्रस्तावना** : सवारी दुर्घटनाको रोकथाम गर्न, दुर्घटनाबाट पीडित पक्षलाई क्षतीपूर्ति दिलाउन, बीमा-व्यवस्था गर्न र सर्वसाधारण जनतालाई सरल एवं सुलभ ढंगबाट यातायात सुविधा उपलव्ध गराउन यातायात सेवालाई सुदृढ, सक्षम तथा प्रभावकारी बनाउन वाञ्छनीय भएकोले,

श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेवको शासनकालको एक्काइसौं वर्षमा संसदले यो ऐन बनाएकोछ ।

## परिच्छेद-१

## प्रारम्भिक

१. **संक्षिप्त नाम र प्रारम्भ** : (१) यस ऐनको नाम "सवारी तथा यातायात व्यवस्था ऐन, २०४९" रहेकोछ ।

(२) यो ऐन तुरून्त प्रारम्भ हुनेछ ।

२. **परिभाषा** : विषय वा प्रसंगले अर्को अर्थ नलागेमा यस ऐनमा,-

(क) "सवारी" भन्नाले यान्त्रिक शक्तिबाट सडकमा चल्ने सवारीको साधन सम्झनु पर्छ ।

---

◎ यो ऐन संवत् २०६५ साल जेठ १५ गतेदेखि लागू भएको, प्रशस्ती र अधिराज्य शब्द झिकिएको ।

(ख) "सवारीको वजन" भन्नाले सवारीको कूल वजन सम्झनु पर्छ ।

**स्पष्टीकरण** : "कूल वजन" भन्नाले सवारीको इन्जीन, चेसिस, अन्य औजार तथा उपकरण लगायत सवारी दर्ताको प्रमाणपत्रमा लेखिएको सो सवारीको कूल भार वहन क्षमता समेतलाई जनाउँछ ।

(ग) "ठूलो सवारी" भन्नाले दफा ३ बमोजिमको सवारी सम्झनु पर्छ ।

(घ) "मझौला सवारी" भन्नाले दफा ४ बमोजिमको सवारी सम्झनु पर्छ ।

(ङ) "सानो सवारी" भन्नाले दफा ५ बमोजिमको सवारी सम्झनु पर्छ ।

(च) "सार्वजनिक सवारी" भन्नाले यातायात सेवामा प्रयोग गरिने सवारी सम्झनु पर्छ ।

(छ) "यातायात सेवा" भन्नाले सार्वजनिक सवारीले भाडा लिई एक ठाउँबाट अर्को ठाउँसम्म यात्री वा मालसामान ओसारपसार गर्ने कार्य सम्झनु पर्छ ।

(ज) "भाडा" भन्नाले सार्वजनिक सवारीले यातायात सेवा प्रदान गरे बापत लिने रकम वा शुल्क सम्झनु पर्छ ।

(झ) "पर्यटक सवारी" भन्नाले दफा ७ बमोजिमको सवारी सम्झनु पर्छ ।

(ञ) "निजी सवारी" भन्नाले दफा ८ बमोजिमको सवारी सम्झनु पर्छ ।

(ट) "सरकारी सवारी" भन्नाले दफा ९ बमोजिमको सवारी सम्झनु पर्छ ।

(ठ) "संस्थानको सवारी" भन्नाले दफा १० बमोजिमको सवारी सम्झनु पर्छ ।

(ड) "कूटनीतिक सुविधा प्राप्त सवारी" भन्नाले दफा ११ बमोजिमको सवारी सम्झनु पर्छ ।

(ढ) "यात्री" भन्नाले सार्वजनिक सवारीबाट यात्रा गर्ने व्यक्ति सम्झनु पर्छ ।

(ण) "मालसामान" भन्नाले मानिस बाहेक सार्वजनिक सवारीमा ओसारपसार गरिने जनावर, पन्छी तथा कुनै निर्जीव वस्तु सम्झनु पर्छ ।

(त) "यात्रीबाहक सवारी" भन्नाले यात्रीहरूलाई यातायात सेवा प्रदान गर्ने सार्वजनिक सवारी सम्झनु पर्छ ।

(थ) "मालबाहक सवारी" भन्नाले मालसामान ओसारपसार गर्ने काममा प्रयोग गरिने सार्वजनिक सवारी सम्झनु पर्छ ।

(द) “दर्ताको प्रमाणपत्र” भन्नाले दफा १६ बमोजिम सवारी दर्ता गरी दिइएको सवारी दर्ता प्रमाणपत्र सम्झनु पर्छ ।

(ध) “चालक” भन्नाले सवारी चालक अनुमतिपत्र प्राप्त व्यक्ति सम्झनु पर्छ ।

(न) “चालक अनुमतिपत्र” भन्नाले दफा ५० बमोजिम अधिकार प्राप्त अधिकारीले दिएको सवारी चालक अनुमतिपत्र सम्झनु पर्छ ।

(प) “परिचालक” भन्नाले दफा ६७ बमोजिम परिचालक अनुमतिपत्र प्राप्त व्यक्ति सम्झनु पर्छ र सो शब्दले सो सवारीमा काम गर्ने अन्य चेकर तथा हेल्परलाई समेत जनाउँछ ।

(फ) “सुरक्षाकर्मी” भन्नाले यात्री, मालसामान तथा सवारीको सुरक्षाको जिम्मा लिने कर्मचारी सम्झनु पर्छ ।

(ब) “सार्वजनिक स्थान” भन्नाले सार्वजनिक सडक, पेटी, गल्ली, नदी, पुल, बाटो वा सर्वसाधारण जनता आउने, जाने, बस्ने ठाउँ सम्झनु पर्छ र सो शब्दले यात्रीहरू चढ्न, उत्रन वा सवारी राख्न निर्धारित ठाउँलाई समेत जनाउँछ ।

(भ) “पार्किङ्गस्थल” भन्नाले सवारी अड्याउन निर्धारित ठाउँ सम्झनु पर्छ ।

(म) “बस बिसौनी” भन्नाले यात्रीबाहक सार्वजनिक सवारीमा यात्रीलाई यात्रा गर्ने प्रयोजनको लागि चढ्न र ओर्लनको निमित्त निर्धारित ठाउँ सम्झनु पर्छ ।

(य) “बाटो” भन्नाले सार्वजनिक सवारी चलाउनलाई निर्धारित बाटो सम्झनु पर्छ ।

(र) “लामोबाटो (लङ्ग रूट)” भन्नाले यात्राको लागि प्रस्थान गर्ने स्थानबाट दुईसय पचास किलोमिटर वा सो भन्दा बढी दूरीको गन्तव्य स्थानसम्म पुग्ने बाटो सम्झनु पर्छ ।

(ल) “मध्यम बाटो (मिडियम रूट)” भन्नाले यात्राको लागि प्रस्थान गर्ने स्थानबाट एकसय किलोमिटरभन्दा बढी तर दुईसय पचास किलोमिटरभन्दा कम्ती दूरीको गन्तव्य स्थानसम्म पुग्ने बाटो सम्झनु पर्छ ।

(व) “छोटो बाटो” भन्नाले यात्राको लागि प्रस्थान गर्ने स्थानबाट पच्चीस किलोमिटरदेखि एकसय किलोमिटरसम्मको दूरीको गन्तव्य स्थानसम्म पुग्ने बाटो सम्झनु पर्छ ।

(श) “स्थानीय बाटो” भन्नाले यात्राको लागि प्रस्थान गर्ने स्थानबाट पच्चीस किलोमिटर भन्दा कम्ती दूरीको गन्तव्य स्थानसम्मको बाटो सम्झनु पर्छ ।

(ष) “बाटो इजाजतपत्र” भन्नाले स्वीकृत बाटोमा सवारी चलाउन दफा ७७ बमोजिम प्राप्त गरेको इजाजतपत्र सम्झनु पर्छ ।

(स) “जाँचपास” भन्नाले सार्वजनिक सवारीको यान्त्रिक स्थितिको परीक्षण गरी दिइएको प्रमाणपत्र सम्झनु पर्छ ।

(ह) “बीमा” भन्नाले सवारी, यात्री, मालसामान, चालक, परिचालक, सुरक्षाकर्मी, सवारीमा काम गर्ने अन्य कर्मचारी तथा तेस्रो पक्षको सम्बन्धमा सवारी धनी वा व्यवस्थापकले गर्नु पर्ने बीमा सम्झनु पर्छ र सो शब्दले तत्सम्बन्धमा गरिने कम्प्रिहेन्सिभ बीमालाई समेत जनाउँछ ।

(क्ष) “सवारी धनी” भन्नाले सवारी दर्ताको प्रमाणपत्रमा सो सवारीको धनी भनी लेखिएको व्यक्ति, फर्म, कम्पनी वा अन्य कुनै संगठित संस्था सम्झनु पर्छ ।

(त्र) “व्यवस्थापक” भन्नाले पञ्जीकृत यातायात सेवामा संलग्न सार्वजनिक सवारीलाई व्यवस्थित रूपमा सञ्चालन गर्ने जिम्मा लिएको व्यक्ति सम्झनु पर्छ ।

(ज्ञ) “यात्री गुण्टा” भन्नाले यात्रीले आफनो साथमा लिई यात्रा गर्ने व्यक्तिगत प्रयोजनका मालसामान सम्झनु पर्छ ।

(ज्ञ१) “ट्राफिक सङ्केत” भन्नाले प्रहरी वा एक सवारी चालकले अर्को सवारीको चालकलाई दिएको सूचना, सङ्केत वा ईशारा सम्झनु पर्छ र सो शब्दले सवारीको नियन्त्रण वा निर्देशनका लागि लिखित वा साङ्केतिक रूपमा टाँसेको, राखेको वा जडान गरिएको सूचना सङ्केत वा ईशारा समेतलाई जनाउँछ ।

(ज्ञ२) “प्रदूषण” भन्नाले सवारीबाट निस्कने ध्वनी तथा धुवाँको प्रदूषण सम्झनु पर्छ ।

(ज्ञ३) “विभाग” भन्नाले नेपाल सरकार, निर्माण तथा यातायात मन्त्रालय, यातायात व्यवस्था विभाग सम्झनु पर्छ ।

(ज्ञ४) “अधिकार प्राप्त अधिकारी” भन्नाले यातायात व्यवस्था कार्यालयका प्रमुख सम्झनु पर्छ ।

(ञ५) "व्यवस्थापन समिति" भन्नाले दफा १५४ बमोजिम गठित यातायात व्यवस्थापन समिति सम्झनु पर्छ ।

(ञ६) "परीक्षा समिति" भन्नाले दफा १५६ बमोजिम गठित परीक्षा समिति सम्झनु पर्छ ।

(ञ७) "यातायात निरीक्षक" भन्नाले दफा १५७ बमोजिम नियुक्त व्यक्ति सम्झनु पर्छ ।

(ञ८) "प्रशिक्षण केन्द्र" भन्नाले दफा १५९ बमोजिम विभागबाट मान्यता प्राप्त सवारी चालक प्रशिक्षण केन्द्र सम्झनु पर्छ ।

(ञ९) "क्षेत्र" भन्नाले यातायात व्यवस्था कार्यालयको प्रादेशिक क्षेत्राधिकार अन्तर्गत पर्ने गरी तोकिएको क्षेत्र सम्झनु पर्छ ।

(ञ१०) "तोकिएको" वा "तोकिएबमोजिम" भन्नाले यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियम वा नेपाल राजपत्रमा सूचना प्रकाशित गरी जारी गरिएको सूचित आदेशमा तोकिएको वा तोकिएबमोजिम सम्झनु पर्छ ।

## परिच्छेद-२

## सवारीको वर्गीकरण

३. **ठूलो सवारी** : दश टनभन्दा बढी वजन भएको अनुसूची -१ को खण्ड (क) मा लिखित सवारीलाई ठूलो सवारी भनिनेछ ।

४. **मझौला सवारी** : चार टनदेखि दश टनसम्म वजन भएको अनुसूची -१ को खण्ड (ख) मा लिखित सवारीलाई मझौला सवारी भनिनेछ ।

५. **सानो सवारी** : चार टनभन्दा कम्ती वजन भएको अनुसूची-१ को खण्ड (ग) मा लिखित सवारीलाई सानो सवारी भनिनेछ ।

६. **सार्वजनिक सवारी** : (१) यातायात सेवा सञ्चालन गर्न दर्ताको प्रमाणपत्र प्राप्त सवारीलाई सार्वजनिक सवारी भनिनेछ ।

(२) सार्वजनिक सवारीलाई यात्रीबाहक र मालबाहक गरी जम्मा दुई किसिममा विभाजन गरिनेछ ।


www.lawcommission.gov.np

(३) यात्रीबाहक सार्वजनिक सवारीलाई दिवा तथा रात्री सेवामा विभाजन गरी देहायका श्रेणीमा छुट्याई यातायात सेवा सञ्चालन गर्ने इजाजतपत्र दिइनेछः-

(क) सिधै (डाइरेक्ट) सेवा,

(ख) द्रूत (एक्सप्रेस) सेवा र

(ग) साधारण (लोकल) सेवा ।

(४) उपदफा (३) बमोजिम विभाजन गरिएका यात्रीबाहक सार्वजनिक सवारीको स्तर, गति तथा अन्य आवश्यक व्यवस्था तोकिएबमोजिम हुनेछ ।

(५) सार्वजनिक सवारीको पहिचानको लागि सो सवारीको अगाडि तथा पछाडि अनुसूची २ को खण्ड (क) मा लेखिएबमोजिम नम्बर प्लेट राख्नु पर्छ ।

७. **पर्यटक सवारी** : (१) विदेशी पर्यटकलाई यातायात सेवा प्रदान गर्न दर्ताको प्रमाणपत्र प्राप्त सार्वजनिक सवारीलाई पर्यटक सवारी भनिनेछ ।

(२) पर्यटक सवारीको पहिचानको लागि सो सवारीको अगाडि तथा पछाडि अनुसूची-२ को खण्ड (ख) मा लेखिए बमोजिमको नम्बर प्लेट राख्नु पर्छ ।

८. **निजी सवारी** : (१) निजी प्रयोगको लागि दर्ताको प्रमाणपत्र प्राप्त सवारीलाई निजी सवारी भनिनेछ ।

(२) निजी सवारी यातायात सेवाको लागि प्रयोग गर्न पाइने छैन ।

(३) निजी सवारीको पहिचानको लागि सो सवारीको अगाडि तथा पछाडि अनुसूची-२ को खण्ड (ग) मा लेखिए बमोजिमको नम्बर प्लेट राख्नु पर्छ ।

९. **सरकारी सवारी** : (१) कुनै सरकारी कार्यालयको नाममा दर्ता भई दर्ताको प्रमाणपत्र प्राप्त नेपाल सरकारको स्वामित्व भएको सवारीलाई सरकारी सवारी भनिनेछ ।

(२) सरकारी सवारीको पहिचानको लागि सो सवारीको अगाडि तथा पछाडि अनुसूची-२ को खण्ड (घ) मा लेखिए बमोजिमको नम्बर प्लेट राख्नु पर्छ ।

१०. **संस्थानको सवारी** : (१) नेपाल सरकारको पूर्ण, अधिकांश वा आंशिक स्वामित्व भएको संगठित संस्थाको नाममा दर्ता भई दर्ताको प्रमाणपत्र प्राप्त सवारीलाई संस्थानको सवारी भनिनेछ ।

(२) संस्थानको सवारीको पहिचानको लागि सो सवारीको अगाडि तथा पछाडि अनुसूची -२ को खण्ड (ङ) मा लेखिए बमोजिमको नम्बर प्लेट राख्नु पर्छ ।

११. **कूटनीतिक सुविधा प्राप्त सवारी** : (१) कूटनीतिक नियोग वा कूटनीतिक सुविधा प्राप्त कार्यालय, योजना, निकाय वा व्यक्तिको नाममा दर्ता भई दर्ताको प्रमाणपत्र प्राप्त सवारीलाई कूटनीतिक सुविधा प्राप्त सवारी भनिनेछ ।

(२) कूटनीतिक सुविधा प्राप्त सवारीको पहिचानको लागि सो सवारीको अगाडि तथा पछाडि अनुसूची -२ को खण्ड (च) मा लेखिए बमोजिमको नम्बर प्लेट राख्नु पर्छ ।

१२. **अन्य प्रयोजनको निम्ति प्रयोग गर्न नहुने** : (१) कुनै एक प्रयोजनको निम्ति दर्ता भएको सवारी अर्को प्रयोजनको निम्ति प्रयोग गर्न पाइने छैन ।

(२) भन्सार महसुल छुट हुने गरी सुविधा प्रदान गरिएको सवारीलाई जुन प्रयोजनको निम्ति भन्सार महसुल छुट दिइएको हो त्यस्तो प्रयोजनको निम्ति बाहेक अन्य प्रयोजनको निम्ति त्यस्तो सुविधा प्राप्त सवारी प्रयोग गर्न पाइने छैन ।

## परिच्छेद-३

## सवारी दर्ता सम्बन्धी व्यवस्था

१३. **प्रवेश दर्ता गराउनु पर्ने**: (१) विदेशबाट सवारी पैठारी गर्ने व्यक्ति, फर्म वा कम्पनीले त्यस्तो सवारी नेपालभित्र प्रवेश गर्ने स्थानमा रहेको प्रहरी कार्यालयमा त्यस्तो सवारीको प्रवेश दर्ता गर्नको लागि दरखास्त दिनु पर्छ ।

(२) उपदफा (१) बमोजिम प्रवेश दर्ता गराउनको लागि दरखास्त परेमा प्रहरी कार्यालयले त्यस्तो सवारी खरीद गरेको निस्सा र सम्बन्धित कागजातहरूको जाँचबुझ गरी त्यस्तो सवारीलाई पन्ध्र दिनको निम्ति प्रवेश दर्ता गरी त्यस्तो सवारी पैठारी गर्ने व्यक्ति, फर्म वा कम्पनीलाई प्रवेश दर्ताको निस्सा दिनु पर्छ र त्यस्तो सवारीको विवरण यथाशीघ्र सम्बन्धित यातायत व्यवस्था कार्यालयमा पठाउनु पर्छ ।

१४. **सवारी दर्ता गराउनु पर्ने** : (१) कुनै पनि सवारी खरीद गर्ने वा विदेशबाट पैठारी गर्ने व्यक्ति, फर्म वा कम्पनीले वा सवारी बिक्री वितरण गर्ने एजेण्टले सवारी खरीद गरेको वा पैठारी गरी नेपालभित्र भन्सार तिरी ल्याएको मितिले पन्ध्रदिनभित्र अधिकार प्राप्त अधिकारी समक्ष दर्ता गराउनु पर्छ ।

(२) उपदफा (१) बमोजिम दर्ता नगरी कुनै पनि सवारी चलाउन वा चलाउन दिन हुँदैन ।

१५. **सवारी दर्ता गराउन दरखास्त दिनु पर्ने** : (१) दफा १४ बमोजिम कुनै सवारी दर्ता गराउनु परेमा त्यस्तो सवारी नेपालभित्र खरीद गरेको भए खरीद गर्ने व्यक्ति, फर्म वा कम्पनी वा एजेण्टले सो खरीद गरेको निस्सा र त्यस्तो सवारी विदेशबाट पैठारी गरेको भए पैठारी गर्ने व्यक्ति, फर्म, कम्पनी वा एजेन्टले सो सवारीको भन्सार महसुल तिरेको निस्सा तथा अन्य सम्बन्धित कागजात सहित तोकिएको ढाँचामा तोकिएको दस्तुर समेत संलग्न राखी अधिकार प्राप्त अधिकारी समक्ष दरखास्त दिनु पर्छ ।

तर कूटनीतिक सुविधा प्राप्त सवारी दर्ता गर्न दर्ता दस्तुर लाग्ने छैन ।

(२) उपदफा (१) बमोजिम दरखास्त दिने व्यक्तिले नेपाली नागरिकताको प्रमाणित प्रतिलिपि र हालसालै खिचिएको आफ्नो तीन प्रति पासपोर्ट साइजको फोटो समेत दरखास्त साथ संलग्न गरेको हुनुपर्छ ।

(३) सरकारी सवारीको हकमा त्यस्तो सवारी जुन सरकारी कार्यालयको नाममा दर्ता हुने हो सो कार्यालयको पत्र र कूटनीतिक सुविधा प्राप्त सवारीको हकमा नेपाल सरकार, परराष्ट्र मन्त्रालयको सिफारिसपत्र समेत संलग्न गरेको हुनु पर्छ । कूटनीतिक सुविधा प्राप्त सवारी कुनै व्यक्तिको नाममा दर्ता हुने भएमा निजले आफ्नो पासपोर्ट वा नागरिकताको प्रतिलिपि एवं तीन प्रति पासपोर्ट साइजको फोटो संलग्न गरेको हुनु पर्छ ।

(४) नेपालभित्र कुनै व्यवसाय तथा काम कारोवार गरी बसेको विदेशी नागरिकले आफ्नो निजी प्रयोगको निम्ति कुनै सवारी दर्ता गराउन चाहेमा उपदफा (१) र (२) मा लेखिएका कुराहरूका अतिरिक्त सम्बन्धित कूटनीतिक नियोगको सिफारिसपत्र समेत संलग्न गरेको हुनु पर्छ ।

(५) नाबालकको नाममा कुनै सवारी दर्ता गराउनु परेमा निजको तर्फबाट निजको संरक्षकले नाबालक तथा आफ्नो समेत तीन तीन प्रति पासपोर्ट साइजको फोटो एवं नागरिकताको प्रमाणित प्रतिलिपि समेत संलग्न राखी दरखास्त दिनु पर्छ ।

१६. **सवारी दर्ताको प्रमाणपत्र** : (१) दफा १५ बमोजिम कुनै सवारी दर्ता गराउनको लागि दरखास्त परेमा अधिकार प्राप्त अधिकारीले आवश्यक जाँचबुझ गरी

दरखास्तवालाको नाममा त्यस्तो सवारी दर्ता गरी अनुसूची-३ बमोजिमको ढाँचामा दर्ताको प्रमाणपत्र दिनु पर्छ ।

✻तर सामाजिक, धार्मिक, परोपकारी तथा शैक्षिक उद्देश्यले स्थापना भएका राष्ट्रिय तथा अन्तरराष्ट्रिय संघ संस्थाहरू एवं प्रचलित कानून बमोजिम स्थापित संगठित संस्थाहरूको नाउँमा बाहेक चौध भन्दा बढी सीट संख्या तथा चार टन वा सो भन्दा बढी कूल वजन भएका सवारीहरूलाई निजीसवारीको रूपमा दर्ता गरिने छैन ।

(२) नाबालकको नाममा सवारी दर्ता गर्दा संरक्षक समेतको नाम दर्ताको प्रमाणपत्रमा उल्लेख गरी दर्ताको प्रमाणपत्रमा निजको समेत सही गराउनु पर्छ ।

(३) दर्ताको प्रमाणपत्रमा सवारी खरीद गर्दा सवारीको निर्माताले दिएको सवारीको प्राविधिक विवरणमा लेखिएको सवारीको कूल भारवहन क्षमतालाई सो सवारीको वजन मानी उल्लेख गर्नु पर्छ र त्यसरी सवारीको वजन उल्लेख गर्दा त्यस्तो सवारीको भार रहित वजन र भारवहन क्षमता समेत छुट्टाछुट्टै रूपमा स्पष्ट हुने गरी उल्लेख गर्नु पर्छ ।

(४) दर्ताको प्रमाणपत्र दिइएको मितिले एक वर्षसम्म बहाल रहनेछ ।

१७. **सडकमा चल्न सक्ने सक्षमताको प्रमाणपत्र दिनु पर्ने** : (१) दफा १६ बमोजिम कुनै सवारी दर्ता गर्नु भन्दा अगावै त्यस्तो सवारी चलाउन सकिने ठीक स्थितिमा छ वा छैन भन्ने कुराको दफा २३ बमोजिम तोकिएको मापदण्डका अधीनमा रही जाँचबुझ गरी चलाउन सकिने ठीक स्थितिमा रहेछ भने मात्र त्यस्तो सवारी दर्ता गरी दर्ताको प्रमाणपत्र दिनु पर्छ । त्यसरी दर्ताको प्रमाणपत्र दिंदा त्यस्तो सवारीको धनीलाई त्यस्तो सवारी सडकमा चल्न सक्ने सक्षमता (रोड ओर्दीनेस) को प्रमाणपत्र समेत दिनु पर्छ ।

(२) उपदफा (१) बमोजिम दिइएको सक्षमताको प्रमाणपत्र सवारीमा टाँसी राख्नु पर्छ ।

१८. **संयुक्त दर्ता** : कुनै सवारी संयुक्त रूपमा दर्ता गर्न दुई वा दुई भन्दा बढी व्यक्तिले अधिकार प्राप्त अधिकारी समक्ष दफा १५ बमोजिम दरखास्त दिएमा अधिकार प्राप्त अधिकारीले आवश्यक जाँचबुझ गरी त्यस्तो सवारीलाई ती व्यक्तिहरूको नाममा

✻ पहिलो संशोधनद्वारा संशोधित ।

संयुक्त रूपमा दर्ता गरी निजहरूलाई दफा १६ मा लेखिए बमोजिमको दर्ता प्रमाणपत्र दिनु पर्छ ।

१९. **अस्थायी दर्ता** : देहायको अवस्थामा कुनै सवारी अस्थायी रूपमा दर्ता गर्न सकिनेछ :-

(क) सवारी पैठारी गर्ने व्यक्ति सवारी दर्ता गराउनु पर्ने म्याद भित्र दर्ता गराउन उपस्थित हुन नसक्ने मनासिब माफिकको कारण भएमा ।

(ख) पैठारी गरिएको सवारीको इन्जीन, चेसिस वा अन्य कुनै पार्टपूर्जाको खराबीको कारणले गर्दा तुरून्त दर्ता गराउन सवारी ल्याउन नसकिने भएमा ।

(ग) खण्ड (ख) मा लेखिएको अवस्थामा परी सो सवारी निर्माण गर्ने कम्पनी वा बिक्री गर्ने एजेन्ट वा बीमा कम्पनीसँग क्षतीपूर्ति बीमासम्बन्धी विवाद परी तुरून्त दर्ता गर्न नसकिने भएमा ।

२०. **अस्थायी दर्ताको लागि दरखास्त** : (१) दफा १९ मा लेखिएको कुनै अवस्था परी कुनै सवारी पैठारी गर्ने व्यक्ति वा निजको अनुपस्थितिमा निजको नजिकको हकवालाले सो सवारी पैठारी गर्ने व्यक्तिको नाममा अस्थायी रूपमा दर्ता गर्न सो सवारीको भन्सार महसूल तिरेको निस्सा तथा अन्य सम्बन्धित कागजातसहित तोकिएको ढाँचामा तोकिएको दस्तुर समेत संलग्न राखी अधिकार प्राप्त अधिकारी समक्ष दरखास्त दिनु पर्छ ।

(२) उपदफा (१) बमोजिम दरखास्त दिंदा दरखास्तवालाले नेपाली नागरिकताको प्रमाणित प्रतिलिपि र जसको नाममा अस्थायी दर्ता गरिने हो सो व्यक्तिको हालसालै खिचिएको तीन प्रति फोटो समेत संलग्न गरेको हुनु पर्छ ।

२१. **अस्थायी दर्ताको प्रमाणपत्र** : (१) दफा २० बमोजिम कुनै सवारी अस्थायी दर्ता गराउनको लागि कसैको दरखास्त परेमा अधिकार प्राप्त अधिकारीले सो सवारी दफा १९ बमोजिम अस्थायी दर्ता गर्न सकिने अवस्था छ छैन भन्ने कुराको जाँचबुझ गरी त्यस्तो सवारी अस्थायी रूपमा दर्ता गरी अनुसूची -४ बमोजिमको ढाँचामा अस्थायी दर्ताको प्रमाणपत्र दिनु पर्छ ।

(२) अस्थायी दर्ताको प्रमाणपत्रमा सो सवारीमा राख्नु पर्ने नम्बर प्लेटमा अस्थायी समेत लेख्नु पर्ने कुरा जनाउनु पर्छ ।

(३) अस्थायी दर्ताको प्रमाणपत्र एकै पटक वा पटक पटक गरी बढीमा छ महीनासम्म बहाल रहने गरी दिन सकिनेछ ।

*२२. **सवारी ल्याउनु पर्ने** : दफा १३, १५ वा २० बमोजिम कुनै सवारी दर्ता गर्न दफा ३७ बमोजिम सवारी नामसारी गर्न र दफा ३९ बमोजिम सवारीको कुनै कुरा हेरफेर गर्नको लागि दरखास्त दिंदा त्यस्तो दरखास्त दिने व्यक्ति, फर्म वा कम्पनीले त्यसरी दर्ता, नामसारी वा कुनै कुरा हेरफेर गराउन चाहेको सवारी समेत साथै ल्याउनु पर्छ ।

२३. **सवारीको जाँचबुझको लागि मापदण्ड तोक्न सकिने** : (१) कुनै सवारी चलाउन सकिने स्थितिमा छ छैन भन्ने कुराको जाँचबुझ गरी यकिन गर्न देहायका कुराहरूका सम्बन्धमा नेपाल सरकारले आवश्यक मापदण्ड निर्धारण गरी तोक्न सक्नेछः-

(क) सवारीको यान्त्रिक स्थितिको सम्बन्धमा ।

(ख) सवारीको लम्बाई, चौडाई, उचाई, बनौट वा स्वरूपको सम्बन्धमा ।

(ग) सवारीबाट हुन सक्ने प्रदूषणको सम्बन्धमा ।

(घ) सवारी चलाउन सकिने अवधिको सम्बन्धमा ।

(२) कुनै सवारी चलाउन सकिने स्थितिमा छ वा छैन भन्ने कुराको जाँचबुझ गरी सक्षमताको प्रमाणपत्र दिंदा वा जाँचपास गर्दा अधिकार प्राप्त अधिकारीले उपदफा (१) बमोजिम तोकिएको मापदण्डका अधीनमा रही जाँचबुझ गर्नु पर्छ ।

२४. **सवारी दर्ता गर्न इन्कार गर्न सकिने** : (१) कुनै सवारी दर्ता गर्नका लागि दरखास्त परी सो सवारी दर्ता गर्ने सम्बन्धमा अधिकार प्राप्त अधिकारीले सो सवारीलाई दफा २३ मा तोकिएका मापदण्डका अधीनमा रही जाँचबुझ गर्दा त्यस्तो सवारी चलाउन सकिने स्थितिमा रहेको नदेखिएमा त्यस्तो सवारी दर्ता गर्न इन्कार गर्न सक्नेछ ।

(२) उपदफा (१) बमोजिम कुनै सवारी दर्ता गर्न इन्कार गरिएमा अधिकार प्राप्त अधिकारीले सोको कारण खुलाई दरखास्तवालालाई सूचना दिनु पर्छ ।

(३) उपदफा (१) र (२) मा जुनसुकै कुरा लेखिएको भए तापनि वातावरणको प्रदूषण, सवारीको चाप, सडकको स्थिति, सवारी आवागमनमा पर्ने कठिनाई वा यस्तै अन्य कारणले गर्दा सार्वजनिक हितको लागि कुनै किसिमको सवारी साधनको दफा

* पहिलो संशोधनद्वारा संशोधित ।

१४ बमोजिम गरिने दर्ता रोक्का गर्न मनासिब देखेमा विभागले कुनै वा सबै यातायात व्यवस्था कार्यालयलाई त्यस्तो सवारीको दर्ता रोक्का गर्ने आदेश दिन सक्नेछ ।

२५. **दर्ताको मान्यता** : (१) यस ऐन बमोजिम कुनै एक क्षेत्रमा दर्ता भएको सवारी अर्को क्षेत्रमा पनि चलाउन सकिनेछ ।

(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि एक क्षेत्रमा दर्ता भएको सवारी लगातार वा पटक पटक गरी एक वर्ष भन्दा बढी कुनै अर्को क्षेत्रमा चलाउन पाईने छैन ।

तर सरकारी सवारी, संस्थानको सवारी, कूटनीतिक सुविधाप्राप्त सवारी र बाटोको इजाजतपत्र प्राप्त सवारीको हकमा यो बन्देज लागू हुनेछैन ।

२६. **जानकारी दिनु पर्ने** : (१) एक क्षेत्रमा दर्ता भएको सवारी अर्को क्षेत्रमा प्रवेश गरेमा प्रवेश गरेको चौबीस घण्टाभित्र सो सवारीको धनी वा चालकले नजीकको प्रहरी कार्यालयमा त्यसको जानकारी दिनु पर्छ ।

(२) उपदफा (१) बमोजिम प्रवेश गरेको सवारी तीस दिन भन्दा बढी त्यस क्षेत्रमा चलाउन परेमा त्यस्तो सवारी सो क्षेत्रमा प्रवेश गरेको सात दिनभित्र सवारी धनी वा चालकले अधिकार प्राप्त अधिकारीबाट स्वीकृति लिनु पर्छ ।

२७. **सरूवा दर्ता** : (१) दफा २५ को उपदफा (२) मा लेखिएको भन्दा बढी अवधिको लागि एक क्षेत्रमा दर्ता भएको सवारी अर्को क्षेत्रमा चलाउन परेमा सवारी धनीले दर्ताको प्रमाणपत्रसाथ आफ्नो हालसालै खिचेको तीन प्रति पासपोर्ट साइजको फोटो र तोकिएको दस्तुर समेत संलग्न राखी तोकिएको ढाँचामा अधिकार प्राप्त अधिकारी समक्ष सरूवा दर्ताको लागि दरखास्त दिनु पर्छ ।

(२) उपदफा (१) बमोजिमको दरखास्त परेमा अधिकार प्राप्त अधिकारीले दफा २३ बमोजिम निर्धारित मापदण्डका अधीनमा रही त्यस्तो सवारीको जाँचबुझ गरी सरूवा दर्ता गर्न उपयुक्त देखेमा त्यस्तो सवारीको सरूवा दर्ता गरी सवारी धनीलाई दर्ताको प्रमाणपत्र दिनु पर्छ ।

२८. **सवारीको लगत राख्नु पर्ने** : अधिकार प्राप्त अधिकारीले यस ऐन बमोजिम दर्ता भएको प्रत्येक सवारीको धनीको नाम, ठेगाना, सवारी दर्ता भएको मिति, दर्ता नम्बर, सवारी निर्माताको नाम, मोडेल, वर्ष, इन्जीन नम्बर, चेसिस नम्बर, सवारीको किसिम

र वजन इत्यादि समेत स्पष्ट रूपमा खुल्ने गरी दर्ता किताबमा लेख्न लगाई सवारीको लगत अद्यावधिक राख्नु पर्छ । त्यस्तो दर्ता किताबको सम्बन्धित पानामा सवारी धनीको फोटो समेत टाँसिएको हुनु पर्छ ।

२९. **अनुमति नलिई विदेशी सवारी चलाउन नहुने** : विदेशमा दर्ता भएको सवारी प्रचलित कानून बमोजिम अनुमति नलिई नेपालभित्र चलाउन हुँदैन ।

३०. **विदेशी सवारी चलाउन अनुमति दिने** : विदेशमा दर्ता भएको सवारी नेपालभित्र चलाउने अनुमति मागेमा अधिकार प्राप्त अधिकारीले तोकिएको दस्तुर लिई बढीमा एक महीनासम्मको लागि त्यस्तो सवारी चलाउने अनुमति दिन सक्नेछ ।

तर त्यस्तो सवारीलाई नेपालभित्र यातायात सेवा सञ्चालन गर्ने अनुमति दिइने छैन ।

३१. **दर्ताको प्रमाणपत्र नवीकरण** : (१) दफा १६ को उपदफा (४) बमोजिम दर्ताको प्रमाणपत्रमा लेखिएको म्याद नाघेको तीन महीनाभित्र दर्ताको प्रमाणपत्र नवीकरण गराई सक्नु पर्छ ।

(२) सवारी धनी वा निजले खटाएको व्यक्तिले उपदफा (१) बमोजिम दर्ताको प्रमाणपत्र नवीकरण गराउनको लागि तोकिएको दस्तुर संलग्न राखी दर्ताको प्रमाणपत्र अधिकार प्राप्त अधिकारी समक्ष पेश गर्नु पर्छ ।

तर कूटनीतिक सुविधा प्राप्त सवारीको दर्ताको प्रमाणपत्र नवीकरण गर्न कुनै दस्तुर लाग्ने छैन ।

(३) उपदफा (२) बमोजिम नवीकरणको लागि दर्ताको प्रमाणपत्र पेश हुन आएमा अधिकार प्राप्त अधिकारीले त्यस्तो दर्ताको प्रमाणपत्र अर्को एक वर्षको लागि नवीकरण गर्नु पर्छ ।

(४) उपदफा (१) बमोजिमको म्याद नाघी दर्ताको प्रमाणपत्र नवीकरण गराउन आउने सवारी धनीबाट नवीकरण दस्तुरको अतिरिक्त सो म्याद नाघेको एक वर्षसम्म एकसय प्रतिशत, दुई वर्षसम्म दुईसय प्रतिशत, तीन वर्षसम्म तीनसय प्रतिशत, चार वर्षसम्म चारसय प्रतिशत र पाँच वर्षसम्म पाँचसय प्रतिशत दस्तुर समेत लिई त्यस्तो दर्ताको प्रमाणपत्र नवीकरण गर्नु पर्छ ।

३२. **अधिकार प्राप्त अधिकारीले सूचना गर्न सक्ने** : दफा ३१ को उपदफा (१) बमोजिमको म्यादभित्र दर्ताको प्रमाणपत्र नवीकरण गर्न नल्याएमा कूटनीतिक सुविधा

प्राप्त सवारीको सम्बन्धमा अधिकार प्राप्त अधिकारीले परराष्ट्र मन्त्रालय मार्फत सम्बन्धित कूटनीतिक नियोग, कार्यालय वा व्यक्तिलाई त्यस्तो सवारीको दर्ताको प्रमाणपत्र नवीकरण गर्न सूचना गर्न सक्नेछ ।

३३. **नवीकरण सम्बन्धी विशेष व्यवस्था** : दफा ३१ को उपदफा (३) मा जुनसुकै कुरा लेखिएको भए तापनि सरकारी सवारी, संस्थानको सवारी, कूटनीतिक सुविधा प्राप्त सवारी र निजी सवारीको धनीले आफ्नो सवारीको दर्ताको प्रमाणपत्र पाँच वर्षसम्म एकै पटक नवीकरण गराउन चाहेमा पाँच वर्षसम्मको लागि लाग्ने नवीकरण दस्तुर संलग्न राखी दर्ताको प्रमाणपत्र पेश गरेमा अधिकार प्राप्त अधिकारीले त्यस्तो दर्ताको प्रमाणपत्र पाँच वर्षसम्मको लागि एकै पटक नवीकरण गर्न सक्नेछ ।

३४. **दर्ताको प्रमाणपत्र स्वतः रद्द हुने** : (१) दफा ३१ को उपदफा (४) बमोजिम निर्धारित अवधिसम्म पनि नवीकरण नगराएको दर्ताको प्रमाणपत्र स्वतः रद्द हुनेछ ।

(२) उपदफा (१) बमोजिम दर्ताको प्रमाणपत्र रद्द भएको सवारीको लगत दर्ता किताबबाट कट्टा हुनेछ ।

(३) उपदफा (२) बमोजिम दर्ता किताबबाट लगत कट्टा भईसकेका दर्ताको प्रमाणपत्र नवीकरण गरिने छैन ।

३५. **पुनः दर्ता हुन सक्ने** : दफा ३४ बमोजिम दर्ताको प्रमाणपत्र रद्द भई लगत कट्टा भएको सवारी पुनः दर्ताको लागि ल्याएमा दफा ३१ बमोजिम लिन बाँकी नवीकरण दस्तुर तथा थप दस्तुरको अतिरिक्त जति वर्षपछि दर्ताको लागि ल्याएको हो त्यति वर्षको लागि दफा ३१ को उपदफा (४) बमोजिमको थप दस्तुरको दोब्बर जरिवाना समेत लिई त्यस्तो सवारी दफा १६ बमोजिम दर्ता गरी सवारी धनीलाई अर्को दर्ताको प्रमाणपत्र दिनु पर्छ ।

३६. **सवारी धनीको ठेगाना बदलिएमा सूचना गर्नुपर्ने** : (१) यस ऐन बमोजिम दर्ता भएको कुनै सवारीको धनीको स्थायी ठेगाना बदलिएमा एक महीनाभित्र दर्ताको प्रमाणपत्र समेत संलग्न राखी सो कुराको सूचना अधिकार प्राप्त अधिकारीलाई दिनु पर्छ ।

(२) उपदफा (१) बमोजिमको सूचना प्राप्त भएपछि अधिकार प्राप्त अधिकारीले दर्ताको प्रमाणपत्रमा नयाँ ठेगाना जनाई दर्ता किताबमा समेत सच्याउनेछ ।

३७. **सवारीको नामसारी** : (१) यस ऐन बमोजिम दर्ता भएको सवारीको धनीले आफ्नो सवारी अरू कसैलाई दान बकस दिई वा बिक्री गरी वा अन्य कुनै किसिमले स्वामित्व हस्तान्तरण गरेमा पन्ध्र दिनभित्र सो सवारीको नामसारीको लागि दर्ताको प्रमाणपत्र र सवारी साधन कर तिरेको निस्सा समेत संलग्न राखी तोकिएको ढाँचामा अधिकार प्राप्त अधिकारी समक्ष दरखास्त दिनु पर्छ ।

(२) सवारी धनीको मृत्यु भई जसको नाममा स्वामित्व हस्तान्तरण हुनुपर्ने हो सो हकवालाले सवारी धनीको मृत्यु भएको मितिले पैंतीस दिनभित्र सवारी धनीको मृत्यु भएको प्रमाण, दर्ताको प्रमाणपत्र र सवारी साधन कर तिरेको निस्सा तथा आफू सबै भन्दा नजीकको हकवाला हो भन्ने कुराको प्रमाण समेत संलग्न राखी सो सवारी आफ्नो नाममा नामसारी गराउन तोकिएको ढाँचामा अधिकार प्राप्त अधिकारी समक्ष दरखास्त दिनु पर्छ ।

(३) उपदफा (१) वा (२) बमोजिम नामसारीको लागि दरखास्त परेमा अधिकार प्राप्त अधिकारीले आवश्यक जाँचबुझ गरी तोकिएको दस्तुर लिई दर्ताको प्रमाणपत्रमा नामसारीको ब्यहोरा जनाई नामसारी गर्नु पर्छ ।

तर उपदफा (२) बमोजिम नामसारीको लागि एक भन्दा बढी बराबरीका हकवालाको दरखास्त परेमा ती सबै हकवालाको नाममा त्यस्तो सवारी संयुक्तरूपमा दर्ता गरी नामसारी गर्नु पर्छ ।

(४) उपदफा (३) बमोजिम कुनै सवारीको नामसारी भएमा सो बमोजिम स्वामित्व हस्तान्तरण भई नामसारी भएको ब्यहोरा दर्ता किताबमा जनाउनु पर्छ ।

(५) यस दफा बमोजिम कुनै सवारीको नामसारी गर्ने सन्दर्भमा अधिकार प्राप्त अधिकारीले जाँचबुझ गर्दा सो सवारीमा हक बेहक सम्बन्धी कुनै मुद्दा परेको देखिएमा त्यस्तो मुद्दाको अन्तिम किनारा नभएसम्म त्यस्तो सवारी कसैको नाममा नामसारी गर्नु हुँदैन ।

३८. **दर्ता परिवर्तन गर्न नहुने** : यस ऐनमा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि मालबाहक सवारीको रूपमा दर्ता भई दर्ताको प्रमाणपत्र प्राप्त सवारीलाई यात्रीबाहक सवारीमा दर्ता परिवर्तन गर्ने गरी दर्ताको प्रमाणपत्र दिइने छैन ।

३९. **स्वीकृति नलिई हेरफेर गर्न नहुने** : (१) सवारी धनीले अधिकार प्राप्त अधिकारीको स्वीकृति नलिई सवारीको रङ्ग, ✂सीट संख्या, स्वरूप, इन्जीन वा चेसिसमा परिवर्तन हुने गरी सवारीमा हेरफेर गर्न हुँदैन ।

तर यस उपदफाले सवारीमा सामान्य पार्ट-पूर्जा परिवर्तन गर्न कुनै बाधा पुऱ्याएको मानिने छैन ।

(२) उपदफा (१) बमोजिम हेरफेर गर्नु परी स्वीकृति मागेमा अधिकार प्राप्त अधिकारीले आवश्यक जाँचबुझ गरी त्यस्तो हेरफेर गर्न उपयुक्त हुने देखेमा हेरफेर गर्ने स्वीकृति दिन सक्नेछ ।

✚तर सवारी निर्माता कम्पनीले सवारीको बनोट सम्बन्धमा निर्धारण गरेको विस्तृत विवरण (स्पेसिफिकेशन) मा परिवर्तन गर्ने गरी स्वीकृति दिइने छैन ।

✚(२क) उपदफा (२) बमोजिम हेरफेरको लागि स्वीकृति दिंदा सवारी दर्ता गर्दा लाग्ने दस्तुरको पचास प्रतिशत दस्तुर लिइनेछ ।

४०. **दर्ताको प्रमाणपत्र स्थगित गर्न सक्ने** : (१) अधिकार प्राप्त अधिकारीले देहायको अवस्थामा कुनै सवारीको दर्ताको प्रमाणपत्र देहाय बमोजिमको अवधिसम्मको लागि स्थगित गर्ने गरी आदेश दिन सक्नेछः-

(क) सवारीको अवस्था खराब भई सो चलाउँदा सर्वसाधारणको जीउ वा सम्पत्तिमा हानि नोक्सानी हुने देखिएमा सो सवारी सन्तोषप्रदरूपमा मरम्मत नगरेसम्मको अवधिको लागि, र

(ख) सवारी धनीले यस ऐन बमोजिम पूरा गर्नु पर्ने कुनै शर्त पूरा नगरी वा यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियमको परिधिभित्र रही अधिकार प्राप्त अधिकारीले दिएको आदेशको उल्लङ्घन गरी सवारी चलाएमा बढीमा छ महीनासम्मको लागि ।

(२) उपदफा (१) बमोजिम दर्ताको प्रमाणपत्र स्थगित गर्ने गरी सवारी धनीलाई आदेश दिंदा अधिकार प्राप्त अधिकारीले सोको कारण समेत स्पष्टरूपमा खुलाएको हुनु पर्छ ।

---

✂ पहिलो संशोधनद्वारा संशोधित ।
✚ पहिलो संशोधनद्वारा थप ।

(३) उपदफा (१) बमोजिम दर्ताको प्रमाणपत्र स्थगित गरेमा अधिकार प्राप्त अधिकारीले त्यसको जानकारी सम्बन्धित प्रहरी कार्यालयलाई दिनु पर्छ ।

(४) उपदफा (१) बमोजिम दर्ताको प्रमाणपत्र स्थगित गरेमा अधिकार प्राप्त अधिकारीले आदेश दिएको मितिले सात दिनभित्र सवारी धनीले दर्ताको प्रमाणपत्र अधिकार प्राप्त अधिकारी समक्ष बुझाउनु पर्छ ।

(५) अधिकार प्राप्त अधिकारीले दर्ताको प्रमाणपत्रको स्थगन अवधि समाप्त भएपछि उपदफा (४) बमोजिम सवारी धनीले बुझाएको दर्ताको प्रमाणपत्र निजलाई नै फिर्ता गर्नु पर्छ ।

(६) उपदफा (५) बमोजिम दर्ताको प्रमाणपत्र सवारी धनीलाई फिर्ता दिंदा अधिकार प्राप्त अधिकारीले सो दर्ताको प्रमाणपत्रमा स्थगित भएको अवधि र कारण समेत स्पष्ट जनाई सो कुराको अभिलेख दर्ता किताबमा समेत जनाउन लगाउनु पर्छ ।

४१. **दर्ताको प्रमाणपत्र खारेज गर्ने** : (१) यस ऐनबमोजिम दर्ता भएको कुनै सवारी कुनै किसिमले नासिएमा वा चल्न नसक्ने गरी बिग्रिएमा वा सधैंको लागि नेपालबाहिर लगिएमा सवारी धनीले तीस दिनभित्र दर्ताको प्रमाणपत्र संलग्न राखी त्यस्तो सवारीको लगत कट्टा गर्न अधिकार प्राप्त अधिकारी समक्ष तोकिएको ढाँचामा दरखास्त दिनु पर्छ ।

तर पुरातात्विक दृष्टिकोणले महत्वपूर्ण सवारी वा त्यस्तो सवारीको कुनै पार्टपूर्जा नेपालबाहिर लग्न परेमा सवारी धनीले अधिकार प्राप्त अधिकारीको पूर्व स्वीकृति लिनु पर्छ ।

(२) उपदफा (१) बमोजिमको दरखास्त परेमा अधिकार प्राप्त अधिकारीले आवश्यक जाँचबुझ गरी ब्यहोरा साँचो देखेमा त्यस्तो दर्ताको प्रमाणपत्र खारेज गरी सो को ब्यहोरा दर्ता किताबमा जनाई त्यस्तो सवारीको लगत कट्टा गर्नु पर्छ ।

४२. **नवीकरण दस्तुर मिन्हा दिने** : यस ऐनबमोजिम दर्ता भएको कुनै सवारी कुनै कारणबाट जफत भई वा दुर्घटनामा परी वा अन्य कुनै कारणबाट बिग्री एक वर्षभन्दा बढी अवधिसम्मका लागि चल्न वा चलाउन नसकिने भएमा सवारी धनीले सो ब्यहोरा खुलाई दर्ताको प्रमाणपत्रको साथ सो कुराको प्रमाण पेश गरेमा अधिकार प्राप्त अधिकारीले त्यस्तो सवारीको दर्ताको प्रमाणपत्र खिची सो सवारी चलाउन नसकिने

अवधिसम्मको लागि ✂सो सवारीको धनीले तिर्नु पर्ने नवीकरण दस्तुर मिनाहा दिन सक्नेछ ।

४३. **दर्ताको प्रमाणपत्रको प्रतिलिपि दिने** : (१) दर्ताको प्रमाणपत्र हराएमा, च्यातिएमा, झुत्रो भई नबुझिने भएमा वा अन्य कुनै कारणबाट नासिएमा सो भए गरेको मितिले पन्ध्र दिनभित्र सवारी धनीले अधिकार प्राप्त अधिकारी समक्ष तोकिएको ढाँचामा तोकिएको दस्तुर संलग्न राखी दरखास्त दिनु पर्छ ।

(२) उपदफा (१) बमोजिम परेको दरखास्त उपर आवश्यक छानबिन गर्दा व्यहोरा ठीक देखेमा अधिकार प्राप्त अधिकारीले सवारी धनीलाई त्यस्तो दर्ताको प्रमाणपत्रको प्रतिलिपि दिनु पर्छ ।

(३) उपदफा (२) बमोजिम दर्ताको प्रमाणपत्रको प्रतिलिपि जारी गरेको सूचना अधिकार प्राप्त अधिकारीले सम्बन्धित प्रहरी कार्यालयलाई दिनेछ ।

४४. **विवरण पेश गर्नु पर्ने** : (१) विदेशबाट सवारी पैठारी गर्ने फर्म, कम्पनी वा एजेण्टले आफूले पैठारी गरेको प्रत्येक सवारीको मोडेल, इन्जिन नम्बर, चेसिस नम्बर तथा त्यस्तो सवारीको किसिम र निर्माताको नाम समेत उल्लेख गरी त्यस्तो सवारीहरू मध्ये कुन सवारी कसलाई कहिले बिक्री गरेको र आफूले पैठारी गरी बाँकी रहेको सवारी मध्ये कति सवारी मौज्दात रहेको छ भन्ने समेत खुलाई प्रत्येक महीना अधिकार प्राप्त अधिकारी समक्ष विवरण पेश गर्नु पर्छ ।

(२) अधिकार प्राप्त अधिकारीले विदेशबाट सवारी पैठारी गरी बिक्री वितरण गर्ने फर्म, कम्पनी वा एजेन्टबाट उपदफा (१) मा लेखिएको विवरणहरूको अतिरिक्त सवारी पैठारी तथा बिक्री वितरण सम्बन्धी अन्य कुनै आवश्यक विवरण तथा कागजात माग्न सक्नेछ । त्यसरी मागिएको विवरण तथा कागजात तुरून्त उपलव्ध गराउने कर्तव्य त्यस्तो फर्म, कम्पनी वा एजेन्टको हुनेछ ।

## परिच्छेद- ४

## चालक अनुमतिपत्र सम्बन्धी व्यवस्था

४५. **सवारी चलाउन नहुने** : कुनै पनि व्यक्तिले चालक अनुमतिपत्र प्राप्त नगरी कुनै पनि सवारी चलाउन हुँदैन ।

✂ पहिलो संशोधनद्वारा संशोधित ।

४६. **सवारी चलाउन दिन नहुने** : कसैले आफ्नो स्वामित्वको वा आफ्नो जिम्मामा रहेको कुनै सवारी चालक अनुमतिपत्र प्राप्त नगरेको कुनै व्यक्तिलाई चलाउन दिन हुँदैन ।

४७. **चालकको लागि अयोग्यता** : देहायका व्यक्तिहरू चालक अनुमतिपत्र प्राप्त गर्न अयोग्य मानिने छन्:-

(क) ठूलो सवारीको निमित्त २१ वर्ष उमेर नपुगेको व्यक्ति ।

(ख) मझौला र सानो सवारीको निमित्त अठार वर्ष उमेर नपुगेको व्यक्ति ।

तर मोटरसाइकल तथा त्यस्तै अन्य सानो दुईपाङ्ग्रे सवारीको निमित्त सोह्र वर्ष उमेर पुगेको व्यक्तिले चालक अनुमतिपत्र प्राप्त गर्न सक्नेछ ।

(ग) छारे रोग भएको वा बौलाएको वा एकाएक रिङ्गटा लाग्ने वा मूर्छा हुने किसिमको रोग भएको व्यक्ति ।

(घ) आँखाको देख्ने शक्ति कमजोर भई चश्मा प्रयोग गर्दा पनि सामान्य तवरले देख्ने शक्ति ठीक नभएको व्यक्ति ।

(ङ) साधारण ध्वनि सङ्केत, आवाज सुन्न नसक्ने गरी बहिरो भएको व्यक्ति ।

(च) रातो, हरियो, पहेंलो इत्यादि रङहरू तुरून्त छुट्याउन नसक्ने दृष्टिदोष भएको व्यक्ति ।

(छ) रतन्धो भएको व्यक्ति, वा

(ज) हात खुट्टा शक्तिहीन भै काम दिन नसक्ने भएको व्यक्ति ।

तर अपाङ्गको निमित्त खास किसिमले बनेको सवारीको निमित्त यो खण्डको बन्देज लागू हुने छैन ।

४८. **चालक अनुमतिपत्रको लागि दरखास्त** : (१) दफा ४७ बमोजिमको अयोग्यता नभएको व्यक्तिले कुनै सवारी चलाउन चालक अनुमतिपत्र लिन चाहेमा तोकिएको ढाँचामा अधिकार प्राप्त अधिकारी समक्ष दरखास्त दिनु पर्छ ।

(२) उपदफा (१) बमोजिमको दरखास्त साथ दरखास्तवालाले चालक अनुमतिपत्रको लागि तोकिएको दस्तुर, नागरिकताको प्रमाणपत्रको प्रमाणित प्रतिलिपि, हालसालै खिचिएको आफ्नो तीन प्रति पासपोर्ट साइजको फोटो, नेपाल सरकारद्वारा मान्यता प्राप्त चिकित्सकले निजको स्वास्थ्य परीक्षण गरी दिएको निरोगिताको

प्रमाणपत्र र निजले चलाउन चाहेको सवारीको सम्बन्धमा प्रशिक्षण केन्द्रले दिएको प्रमाणपत्रको प्रतिलिपि समेत संलग्न गर्नु पर्छ ।

**४९. दरखास्तवालाको परीक्षण** : (१) दफा ४८ बमोजिम दरखास्त परेपछि दरखास्तवाला त्यस्तो सवारी चलाउन समर्थ छ छैन र निजलाई त्यस्तो सवारी वा सवारी सम्बन्धी ऐन, नियम तथा ट्राफिक सङ्केत सम्बन्धी सामान्य ज्ञान छ छैन भन्ने कुराको यकिन गर्न परीक्षा लिनु पर्छ । त्यसरी लिइने परीक्षाको विषय र परीक्षा प्रणाली विभागले तोकिदिए बमोजिम हुनेछ ।

(२) उपदफा (१) बमोजिम लिइएको परीक्षामा असफल हुने दरखास्तवालाले सो परीक्षा सम्पन्न भएको मितिले तीन महीना पूरा नभएसम्म दफा ४८ बमोजिम पुनः दरखास्त दिन पाउने छैन ।

**५०. चालक अनुमतिपत्र दिने** : (१) दफा ४९ बमोजिम ✄.............. परीक्षा लिई सफल भएका दरखास्तवालालाई सो समितिको सिफारिशमा अधिकार प्राप्त अधिकारीले अनुसूची - ५ बमोजिमको ढाँचामा चालक अनुमतिपत्र दिनु पर्छ ।

(२) उपदफा (१) बमोजिम अनुमतिपत्र दिंदा सो अनुमतिपत्रमा ठूलो, मझौला, सानो वा ती मध्ये कुनै वा सबै सवारी चलाउन दिइएको हो भन्ने कुरा स्पष्ट रूपमा जनाउनु पर्छ ।

(३) यस ऐनमा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि सार्वजनिक सवारी चलाउने चालकलाई दिइने चालक अनुमतिपत्र सम्बन्धी व्यवस्था तोकिए बमोजिम हुनेछ ।

**५१. परीक्षणकालमा रहने** : (१) दफा ५० बमोजिम दिइने चालक अनुमतिपत्र शुरूमा एक वर्षको लागि परीक्षणकालमा रहने गरी दिइनेछ ।

(२) परीक्षणकालभित्र चालकले यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियमबमोजिम पालन गर्नु पर्ने शर्तको उल्लङ्घन पाँच पटकभन्दा बढी नगरेमा निजको अनुरोधमा अधिकार प्राप्त अधिकारीले निजको चालक अनुमतिपत्र स्थायीमा परिणत गरी दिनु पर्छ ।

**५२. विदेशी राष्ट्रबाट प्राप्त चालक अनुमतिपत्रको मान्यता** : कसैले विदेशी राष्ट्रबाट चालक अनुमतिपत्र प्राप्त गरेको रहेछ भने सो अनुमतिपत्रमा लेखिएको सवारी

---
✄ पहिलो संशोधनद्वारा झिकिएको ।

चलाउन त्यस्तो व्यक्तिले दफा ४८ बमोजिम दरखास्त दिएमा अधिकार प्राप्त अधिकारीले त्यस्तो व्यक्तिबाट चालक अनुमतिपत्रको लागि लाग्ने दस्तुर लिई चालक अनुमतिपत्र दिन सक्नेछ ।

तर त्यस्तो व्यक्तिले चालक अनुमतिपत्र लिन कुनै परीक्षा दिनु पर्ने छैन ।

**५३.** **अन्तर्राष्ट्रिय चालक अनुमतिपत्र स्वतः मान्य हुने** : अन्तर्राष्ट्रिय चालक अनुमतिपत्र प्राप्त गरेको व्यक्तिले सो अनुमतिपत्रमा लेखिएको सवारीहरू नेपालभर चलाउन पाउनेछ ।

**५४.** **चालक अनुमतिपत्रको वैधता** : (१) दफा ५० बमोजिम चालक अनुमतिपत्र प्राप्त गर्ने व्यक्तिले सो अनुमतिपत्रमा लेखिएका सवारीहरू मात्र चलाउन पाउनेछ ।

(२) उपदफा (१) का अधीनमा रही चालकले त्यस्तो सवारी नेपालभर चलाउन पाउनेछ ।

(३) चालक अनुमतिपत्र दिइएको मितिले पाँच वर्षसम्म बहाल रहनेछ ।

**५५.** **चालक अनुमतिपत्रमा अरू सवारी समावेश गर्ने** : (१) कुनै चालकले आफूले पाएको चालक अनुमतिपत्रमा लेखिएका सवारीका अतिरिक्त अन्य कुनै सवारी समावेश गराउन चाहेमा समावेश गराउन चाहेको सवारीको किसिम खुलाई तोकिएको ढाँचामा तोकिएको दस्तुर संलग्न राखी अधिकार प्राप्त अधिकारी समक्ष दरखास्त दिनु पर्छ ।

(२) उपदफा (१) बमोजिम दरखास्त परेमा परीक्षा समितिले चालक अनुमतिपत्रमा समावेश गराउन चाहेको सवारी चालकले चलाउन सक्छ सक्तैन भन्ने कुराको यकिन गर्न दफा ४९ बमोजिम निजको परीक्षा लिनु पर्छ ।

(३) उपदफा (२) बमोजिम परीक्षा लिंदा सफल भएको चालकको अनुमतिपत्रमा निजले समावेश गराउन चाहेको सवारी समावेश गरी अधिकार प्राप्त अधिकारीले नयाँ चालक अनुमतिपत्र दिनु पर्छ ।

(४) ✲उपदफा (३) बमोजिम चालक अनुमतिपत्र दिंदा दफा ५१ बमोजिम परीक्षणकालमा रहने गरी दिइनेछ ।

✲ पहिलो संशोधनद्वारा संशोधित ।

५६. **चालक अनुमतिपत्रको नवीकरण**: (१) दफा ५४ को उपदफा (३) बमोजिम चालक अनुमतिपत्रमा लेखिएको म्याद नाघेको तीन महीनाभित्र त्यस्तो चालक अनुमतिपत्र नवीकरण गराई सक्नु पर्छ ।

(२) चालकले उपदफा (१) बमोजिमको म्यादभित्र ✚चालक अनुमतिपत्र नवीकरण गराउनको लागि तोकिएको दस्तुर संलग्न राखी अधिकारप्राप्त अधिकारी समक्ष पेश गर्नु पर्छ ।

(३) उपदफा (२) बमोजिम नवीकरणको लागि चालक अनुमतिपत्र पेश हुन आएमा अधिकार प्राप्त अधिकारीले त्यस्तो चालक अनुमतिपत्र अर्को पाँच वर्षसम्मको लागि नवीकरण गर्नु पर्छ ।

(४) उपदफा (१) बमोजिम म्याद नाघी चालक अनुमतिपत्र नवीकरण गराउन आउने चालकबाट नवीकरण दस्तुरको अतिरिक्त सो म्याद नाघेको एक वर्षसम्म एकसय प्रतिशत, दुई वर्षसम्म दुईसय प्रतिशत, तीन वर्षसम्म तीनसय प्रतिशत, चार वर्षसम्म चारसय प्रतिशत र पाँच वर्षसम्म पाँचसय प्रतिशत थप दस्तुर समेत लिई त्यस्तो चालक अनुमतिपत्र नवीकरण गर्नु पर्छ ।

५७. **चालक अनुमतिपत्र स्वतः रद्द हुने** : (१) दफा ५६ को उपदफा (४) बमोजिम निर्धारित अवधिसम्म पनि नवीकरण नगरिएको चालक अनुमतिपत्र स्वतः रद्द हुनेछ ।

(२) उपदफा (१) बमोजिम रद्द भएको चालक अनुमतिपत्रको लगत दर्ता किताबबाट कट्टा गरिनेछ ।

(३) उपदफा (२) बमोजिम दर्ता किताबबाट लगत कट्टा भईसकेको चालक अनुमतिपत्र नवीकरण गरिने छैन ।

५८. **नवीकरण गराउँदा निरोगिताको प्रमाणपत्र पेश गर्नु पर्ने** : सार्वजनिक सवारी चलाउने चालकले चालक अनुमतिपत्र नवीकरण गराउँदा स्वीकृत चिकित्सकले दिएको निरोगिताको प्रमाणपत्र समेत अधिकार प्राप्त अधिकारी समक्ष पेश गर्नु पर्छ ।

५९. **चालकको ठेगाना बदलिएमा सूचना गर्नु पर्ने** : (१) चालकको स्थायी ठेगाना बदलिएमा एक महीनाभित्र सो कुराको सूचना अधिकार प्राप्त अधिकारीलाई दिनु पर्छ ।

(२) उपदफा (१) बमोजिमको सूचना प्राप्त भएपछि अधिकार प्राप्त अधिकारीले चालकको नयाँ ठेगाना समेत दर्ता किताबमा जनाउन लगाउनु पर्छ ।

---

✚ पहिलो संशोधनद्वारा थप ।

६०. **चालक अनुमतिपत्र निलम्बन गर्न सकिने** : यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियमबमोजिम चालकले पालन गर्नु पर्ने शर्तहरू पाँच पटकभन्दा बढी उल्लङ्घन गरेको प्रमाणित भएमा अधिकारप्राप्त अधिकारीले त्यस्तो चालकको चालक अनुमतिपत्र छ महीनासम्मको लागि निलम्बन गर्न सक्नेछ ।

६१. **चालक अनुमतिपत्र खारेज गर्न सकिने** : (१) कुनै चालकमा दफा ४७ मा लेखिएको कुनै अयोग्यता भएको प्रमाणित भएमा अधिकार प्राप्त अधिकारीले त्यस्तो चालकको चालक अनुमतिपत्र खारेज गरी सो अनुमतिपत्र फिर्ता बुझाउन चालकलाई आदेश दिन सक्नेछ ।

(२) उपदफा (१) बमोजिमको आदेश प्राप्त भएको मितिले सात दिनभित्र चालकले आफ्नो अनुमतिपत्र अधिकार प्राप्त अधिकारीसमक्ष फिर्ता बुझाउनु पर्छ ।

६२. **चालक अनुमतिपत्रको प्रतिलिपि दिने** : (१) चालक अनुमतिपत्र हराएमा, च्यातिएमा, झुत्रो भई नबुझिने भएमा वा कुनै कारणबाट नासिएमा सात दिनभित्र चालकले सम्बन्धित अधिकार प्राप्त अधिकारी समक्ष चालक अनुमतिपत्रको प्रतिलिपिको लागि तोकिएको ढाँचामा ✚तोकिएको दस्तुर समेत राखी दरखास्त दिनु पर्नेछ ।

(२) उपदफा (१) बमोजिम परेको दरखास्त उपर आवश्यक छानबीन गरी व्यहोरा ठीक देखेमा अधिकार प्राप्त अधिकारीले चालकलाई चालक अनुमतिपत्रको प्रतिलिपि दिनेछ ।

(३) उपदफा (२) बमोजिम चालक अनुमतिपत्रको प्रतिलिपि जारी गरेको सूचना अधिकार प्राप्त अधिकारीले सम्बन्धित प्रहरी कार्यालयलाई दिनेछ ।

## परिच्छेद- ५

## परिचालक अनुमतिपत्र सम्बन्धी व्यवस्था

६३. **अनुमतिपत्र नलिई परिचालकको काम गर्न नहुने** : कुनै पनि व्यक्तिले परिचालक अनुमतिपत्र प्राप्त नगरी कुनै पनि सार्वजनिक सवारीमा परिचालकको काम गर्नु हुँदैन ।

---
✚ पहिलो संशोधनद्वारा थप ।

६४. **परिचालकको काममा लगाउन नहुने** : परिचालक अनुमतिपत्र प्राप्त नगरेको कुनै पनि व्यक्तिलाई सार्वजनिक सवारीको धनी वा व्यवस्थापकले परिचालकको काममा लगाउन हुँदैन ।

६५. **परिचालकको लागि अयोग्यता** : देहायको व्यक्ति परिचालक अनुमतिपत्र प्राप्त गर्न अयोग्य हुनेछ :-

(क) अठार वर्ष उमेर नपुगेको,

(ख) साधारण लेखपढ गर्न नजान्ने,

(ग) निरोगिताको प्रमाणपत्र पेश गर्न नसक्ने ।

६६. **परिचालक अनुमतिपत्रको लागि दरखास्त दिने** : (१) दफा ६५ बमोजिमको अयोग्यता नभएको व्यक्तिले कुनै सार्वजनिक सवारीमा परिचालकको काम गर्नको लागि परिचालक अनुमतिपत्र लिन चाहेमा तोकिएको ढाँचामा अधिकार प्राप्त अधिकारी समक्ष दरखास्त दिनु पर्छ ।

(२) उपदफा (१) बमोजिमको दरखास्त साथ दरखास्तवालाले परिचालक अनुमतिपत्रको लागि तोकिएको दस्तुर, हालसालै खिचिएको आफ्नो तीनप्रति पासपोर्ट साइजको फोटो, नागरिकताको प्रमाणपत्रको प्रमाणित प्रतिलिपि र नेपाल सरकारद्वारा मान्यता प्राप्त चिकित्सकद्वारा दिइएको निरोगिताको प्रमाणपत्र समेत संलग्न गर्नु पर्छ ।

६७. **परिचालक अनुमतिपत्र दिने** : (१) दफा ६६ बमोजिम परिचालक अनुमतिपत्रको लागि दरखास्त परेमा अधिकार प्राप्त अधिकारीले आवश्यक जाँचबुझ गरी दरखास्तसाथ संलग्न ब्यहोरा साँचो देखिएमा दरखास्तवालालाई अनुसूची-६ बमोजिमको ढाँचामा परिचालक अनुमतिपत्र दिनु पर्छ । यसरी परिचालक अनुमतिपत्र प्राप्त व्यक्तिले आफू कार्यरत यातायात सेवामा संलग्न सार्वजनिक सवारीलाई सुव्यवस्थित ढङ्गबाट परिचालन गर्ने जिम्मेवारी वहन गर्नु पर्छ ।

(२) उपदफा (१) बमोजिम दिइएको परिचालक अनुमतिपत्र सो दिइएको मितिले पाँचवर्ष सम्म बहाल रहनेछ ।

६८. **परिचालक अनुमतिपत्रको नवीकरण** : (१) दफा ६७ को उपदफा (२) बमोजिम परिचालक अनुमतिपत्रमा लिखित म्याद नाघेको तीन महीनाभित्र त्यस्तो परिचालक अनुमतिपत्र नवीकरण गराई सक्नु पर्छ ।

(२) परिचालकले उपदफा (१) बमोजिमको म्यादभित्र परिचालक अनुमतिपत्र नवीकरण गराउनको लागि तोकिएको दस्तुर संलग्न राखी परिचालक अनुमतिपत्र अधिकार प्राप्त अधिकारी समक्ष पेश गर्नु पर्छ ।

(३) उपदफा (२) बमोजिम नवीकरणको लागि परिचालक अनुमतिपत्र पेश हुन आएमा अधिकार प्राप्त अधिकारीले त्यस्तो परिचालक अनुमतिपत्र अर्को पाँच वर्षसम्मको लागि नवीकरण गर्नु पर्छ ।

(४) उपदफा (१) बमोजिमको म्याद नाघी परिचालक अनुमतिपत्र नवीकरण गराउन आउने परिचालकबाट नवीकरण दस्तुरको अतिरिक्त सो म्याद नाघेको एक वर्षसम्म एकसय प्रतिशत, दुई वर्षसम्म दुईसय प्रतिशत, तीन वर्षसम्म तीनसय प्रतिशत, चार वर्षसम्म चारसय प्रतिशत र पाँच वर्षसम्म पाँचसय प्रतिशत थप दस्तुर लिई त्यस्तो परिचालक अनुमतिपत्र नवीकरण गर्नु पर्छ ।

६९. **परिचालक अनुमतिपत्र स्वतः रद्द हुने** : (१) दफा ६८ को उपदफा (४) बमोजिम निर्धारित अवधिसम्म पनि नवीकरण नगरिएको परिचालक अनुमतिपत्र स्वतः रद्द हुनेछ ।

(२) उपदफा (१) बमोजिम रद्द भएको परिचालक अनुमतिपत्रको लगत दर्ता किताबबाट कट्टा गरिनेछ ।

(३) उपदफा (२) बमोजिम दर्ता किताबबाट लगत कट्टा भईसकेको परिचालक अनुमतिपत्र नवीकरण गरिने छैन ।

७०. **परिचालकको ठेगाना बदलिएमा सूचना गर्नु पर्ने** : (१) परिचालकको स्थायी ठेगाना बदलिएमा एक महीनाभित्र सो कुराको सूचना अधिकार प्राप्त अधिकारीलाई दिनु पर्छ ।

(२) उपदफा (१) बमोजिमको सूचना प्राप्त भएपछि अधिकार प्राप्त अधिकारीले परिचालकको नयाँ ठेगाना समेत दर्ता किताबमा जनाउन लगाउनु पर्छ ।

७१. **परिचालक अनुमतिपत्र निलम्बन गर्न सकिने** : यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियमबमोजिम परिचालकले पालन गर्नु पर्ने शर्तहरू पाँच पटकभन्दा बढी उल्लङ्घन

गरेको प्रमाणित भएमा अधिकार प्राप्त अधिकारीले त्यस्तो परिचालकको परिचालक अनुमतिपत्र छ महीनासम्मको लागि निलम्बन गर्न सक्नेछ ।

७२. **परिचालक अनुमतिपत्र खारेज गर्न सकिने** : (१) दफा ६५ मा लेखिएको कुनै अयोग्यता परिचालकमा भएको प्रमाणित भएमा अधिकार प्राप्त अधिकारीले त्यस्तो परिचालकको परिचालक अनुमतिपत्र खारेज गरी सो अनुमतिपत्र फिर्ता बुझाउन परिचालकलाई आदेश दिन सक्नेछ ।

(२) उपदफा (१) बमोजिमको आदेश प्राप्त भएको मितिले सात दिनभित्र परिचालकले आफ्नो परिचालक अनुमतिपत्र अधिकार प्राप्त अधिकारी समक्ष फिर्ता बुझाउनु पर्छ ।

७३. **परिचालक अनुमतिपत्रको प्रतिलिपि दिने**: (१) परिचालक अनुमतिपत्र हराएमा वा अन्य कुनै कारणबाट नासिएमा सात दिनभित्र परिचालकले सम्बन्धित अधिकार प्राप्त अधिकारी समक्ष परिचालक अनुमतिपत्रको प्रतिलिपिको लागि तोकिएको ढाँचामा ✚तोकिएको दस्तुर समेत राखी दरखास्त दिनु पर्छ ।

(२) उपदफा (१) बमोजिमको दरखास्त उपर आवश्यक छानबिन गरी ब्यहोरा ठीक देखेमा अधिकार प्राप्त अधिकारीले परिचालकलाई परिचालक अनुमतिपत्रको प्रतिलिपि दिनेछ ।

(३) उपदफा (२) बमोजिम परिचालक अनुमतिपत्रको प्रतिलिपि जारी गरेको सूचना अधिकार प्राप्त अधिकारीले सम्बन्धित प्रहरी कार्यालयलाई दिनेछ ।

## परिच्छेद- ६

## यातायात व्यवस्थापन

७४. **बाटो निर्धारण गर्ने** : विभागले उपयुक्त देखेको ठाउँमा आवश्यकतानुसार सार्वजनिक सवारीलाई यातायात सेवा सञ्चालन गर्न बाटो निर्धारण गरी सो को सूचना सर्वसाधारणको जानकारीको लागि सार्वजनिक रूपमा प्रकाशित गर्नु पर्छ ।

७५. **बाटो इजाजतपत्र नलिई यातायात सेवा सञ्चालन गर्न नहुने** : दफा ७४ बमोजिम निर्धारित बाटोमा बाटो इजाजतपत्र प्राप्त नगरी कुनै पनि सार्वजनिक सवारीले यातायात सेवा सञ्चालन गर्न पाउने छैन ।

✚ पहिलो संशोधनद्वारा थप ।

७६. **बाटो ईजाजतपत्रको लागि दरखास्त** : यातायात सेवा सञ्चालन गर्नको निमित्त कुनै सार्वजनिक सवारीलाई कुनै बाटो प्रयोग गर्नु परेमा व्यवस्थापक वा सवारी धनीले तोकिएको ढाँचामा अधिकार प्राप्त अधिकारी समक्ष बाटो इजाजतपत्रको लागि तोकिएको दस्तुर सहित दरखास्त दिनु पर्छ ।

७७. **बाटो इजाजतपत्र दिनु पर्ने** : (१) दफा ७६ बमोजिम बाटो इजाजतपत्रको लागि दरखास्त परेमा अधिकारप्राप्त अधिकारीले दफा ७८ को अधीनमा रही त्यस्तो सार्वजनिक सवारीलाई त्यस्तो बाटोमा प्रयोग गर्न अनुसूची -७ बमोजिमको ढाँचामा बाटो इजाजतपत्र दिनु पर्छ ।

(२) उपदफा (१) बमोजिम दिइएको बाटो इजाजतपत्र सो दिइएको मितिले चार महीनासम्म बहाल रहनेछ ।

७८. **बाटो इजाजतपत्र दिंदा जाँचनु पर्ने कुराहरू** : दफा ७७ बमोजिम कुनै सार्वजनिक सवारीलाई बाटो इजाजतपत्र दिंदा त्यस्तो ✤सार्वजनिक सवारीको धनी वा व्यवस्थापकले देहायका कुराहरू पूरा गरे नगरेको अधिकार प्राप्त अधिकारीले जाँच गरी पूरा गरेको भए मात्र त्यस्तो सार्वजनिक सवारीलाई बाटो इजाजतपत्र दिनुपर्छ :-

(क) सवारी चालक, परिचालक, सुरक्षाकर्मी तथा सवारीमा काम गर्ने अन्य कर्मचारी तथा तेस्रो पक्षको बीमा,

(ख) सवारीको जाँचपास र

(ग) दर्ताको प्रमाणपत्र नवीकरण ।

७९. **बाटो परिवर्तन गर्नु परेमा** : (१) बाटो इजाजतपत्रको अवधि समाप्त नहुँदै सो बाटो इजाजतपत्रमा तोकिएको सार्वजनिक सवारीलाई अन्य कुनै बाटोमा प्रयोग गर्नु परेमा सवारी धनी वा व्यवस्थापकले पुनः दफा ७६ बमोजिम बाटो इजाजतपत्रको लागि दरखास्त दिई बाटो इजाजतपत्र लिनु पर्छ ।

(२) उपदफा (१) बमोजिमको दरखास्त परेमा अधिकार प्राप्त अधिकारीले त्यस्तो सार्वजनिक सवारीको लागि पहिले दिएको बाटो इजाजतपत्र खारेज गरी नयाँ बाटो इजाजतपत्र दिनु पर्छ ।

---

✤ पहिलो संशोधनद्वारा संशोधित ।

८०. **<u>बहु बाटो इजाजतपत्र दिन सकिने</u>** : (१) यस ऐनमा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि कुनै सार्वजनिक सवारीले यातायात सेवा पुऱ्याई रहेको बाटोमा कुनै असर नपर्ने गरी सो बाटोसँग सम्बन्धित हुन आउने अन्य बाटोमा समेत उक्त सार्वजनिक सवारी प्रयोग गर्न पाउने गरी अधिकार प्राप्त अधिकारीले बाटो इजाजतपत्र दिन सक्नेछ ।

(२) उपदफा (१) बमोजिम एक भन्दा बढी बाटोमा यातायात सेवा सञ्चालन गर्न पाउने गरी बहु बाटो इजाजतपत्र दिंदा त्यस्तो प्रत्येक बाटोको लागि लाग्ने बाटो दस्तुर समेत सार्वजनिक सवारीको धनी वा व्यवस्थापकले बुझाउनु पर्छ ।

८१. **<u>पटके बाटो इजाजतपत्र</u>** : (१) विशेष काम परी कुनै सार्वजनिक सवारीलाई बाटो इजाजतपत्रमा लेखिएको बाटो बाहेक अन्य कुनै बाटोमा चलाउनु परेमा त्यस्तो सार्वजनिक सवारीको धनी वा व्यवस्थापकले पटके बाटो इजाजतपत्रको लागि तोकिएको ढाँचामा तोकिएको दस्तुर समेत संलग्न राखी अधिकार प्राप्त अधिकारी समक्ष दरखास्त दिनु पर्छ ।

(२) उपदफा (१) बमोजिम दरखास्त परेमा अधिकार प्राप्त अधिकारीले आवश्यक जाँचबुझ गरी ब्यहोरा ठीक देखेमा बढीमा सात दिनसम्मको लागि पटके बाटो इजाजतपत्र दिन सक्नेछ ।

८२. **<u>बाटो इजाजतपत्र दिन इन्कार गर्न सकिने</u>** : (१) यस ऐनमा अन्यत्र जुनसुकै कुरा लेखिएको भएतापनि कुनै बाटोमा यातायात सेवा सञ्चालन गर्न बाटो इजाजतपत्र प्रदान गर्दा त्यस्तो बाटोमा यात्रीको चाप र यातायात सेवामा संलग्न सार्वजनिक सवारीको सङ्ख्यालाई हेर्दा फेरि अर्को सवारीको निमित्त सोही बाटोमा बाटो इजाजतपत्र प्रदान गर्न आवश्यक नदेखिएमा वा प्रदूषणको कारण वा अन्य कुनै कारणबाट कुनै सार्वजनिक सवारीको निमित्त बाटो इजाजतपत्र प्रदान गर्दा सार्वजनिक हितको प्रतिकूल हुन जान्छ भन्ने अधिकार प्राप्त अधिकारीलाई लागेमा निजले ✚<u>व्यवस्थापन समितिसँग परामर्श गरी</u> बाटो इजाजतपत्र दिन इन्कार गर्न सक्नेछ ।

(२) मध्यम बाटो र लामो बाटोमा यातायात सेवा सञ्चालन गर्ने सार्वजनिक सवारी तथा त्यसमा यात्रा गर्ने यात्री एवं काम गर्ने कर्मचारी समेतको सुरक्षालाई ध्यानमा राखी त्यस्तो बाटोमा यातायात सेवा प्रदान गर्ने सार्वजनिक सवारीको स्तर तोकिए बमोजिम हुनेछ । अधिकार प्राप्त अधिकारीले तोकिएको स्तर नभएका

✚ पहिलो संशोधनद्वारा थप ।

सार्वजनिक सवारीलाई त्यस्तो बाटोमा यातायात सेवा सञ्चालन गर्ने बाटो इजाजतपत्र दिन इन्कार गर्न सक्नेछ ।

८३. **बाटो इजाजतपत्र नवीकरण** : (१) दफा ७७ को उपदफा (२) बमोजिम बाटो इजाजतपत्रमा लेखिएको म्याद नाघेको ✂पन्ध्र दिनभित्र त्यस्तो बाटो इजाजतपत्र नवीकरण गराई सक्नु पर्छ ।

(२) सवारी धनी, व्यवस्थापक वा निजहरूले खटाएको व्यक्तिले उपदफा (१) बमोजिम बाटो इजाजतपत्र नवीकरण गराउनको लागि तोकिएको ढाँचामा तोकिएको दस्तुर समेत संलग्न राखी अधिकार प्राप्त अधिकारी समक्ष दरखास्त दिनु पर्छ ।

(३) उपदफा (२) बमोजिम नवीकरणको लागि दरखास्त परेमा अधिकार प्राप्त अधिकारीले त्यस्तो बाटो इजाजतपत्र अर्को चार महीनाको लागि नवीकरण गर्नु पर्छ ।

(४) उपदफा (१) बमोजिमको म्याद नाघी बाटो इजाजतपत्र नवीकरण गराउन आउने सवारी धनीबाट सो म्याद नाघेको एक महीनासम्म नवीकरण दस्तुरको अतिरिक्त शत प्रतिशत थप दस्तुर लिई त्यस्तो बाटो इजाजतपत्र नवीकरण गर्नु पर्छ ।

८४. **बाटो इजाजतपत्र स्वतः रद्द हुने** : (१) दफा ८३ को उपदफा (४) बमोजिम निर्धारित अवधिसम्म पनि नवीकरण नगरिएमा त्यस्तो बाटो इजाजतपत्र स्वतः रद्द हुनेछ ।

(२) उपदफा (१) बमोजिम रद्द भएको बाटो इजाजतपत्रको लगत कट्टा गरिनेछ ।

(३) उपदफा (२) बमोजिम लगत कट्टा भईसकेको बाटो इजाजतपत्र नवीकरण गरिनेछैन ।

८५. **पुनः बाटो इजाजतपत्र दिन सकिने** : दफा ८४ बमोजिम रद्द भई लगत कट्टा भएको बाटो इजाजतपत्रमा लेखिएको सार्वजनिक सवारीको लागि पुनः बाटो इजाजतपत्र लिन आएमा त्यस्तो सवारीको धनी वा व्यवस्थापकबाट दफा ८३ बमोजिम लिनु पर्ने नवीकरण तथा थप दस्तुर समेत लिई निजलाई दुई हजार रुपैयाँसम्म जरिवाना गरी त्यस्तो सवारी चलाउन दफा ७७ बमोजिम अर्को बाटो इजाजतपत्र दिनु पर्छ ।

---

✂ पहिलो संशोधनद्वारा संशोधित ।

८६. **बाटो इजाजतपत्र स्थगित गर्न सकिने** : (१) यस ऐन बमोजिम बाटो इजाजतपत्र लिएको कुनै सार्वजनिक सवारी दुर्घटनामा परी वा अन्य कुनै कारणबाट बिग्री चार महीना वा सो भन्दा बढी अवधिसम्म चलाउन नसकिने भएमा सवारी धनीले सो ब्यहोरा खुलाई बाटो इजाजतपत्र संलग्न राखी अधिकार प्राप्त अधिकारी समक्ष त्यस्तो बाटो इजाजतपत्र स्थगित गर्नका लागि दरखास्त दिनु पर्छ ।

(२) उपदफा (१) बमोजिमको दरखास्त परेमा अधिकार प्राप्त अधिकारीले आवश्यक जाँचबुझ गरी उपयुक्त देखेमा त्यस्तो सार्वजनिक सवारी चलाउन नसकिने अवधिसम्मका लागि त्यस्तो सवारीको बाटो इजाजतपत्र स्थगित गर्न सक्नेछ ।

✚(२क) बाटो इजाजतपत्रमा तोकेको बाटोमा सार्वजनिक सवारी साधन सञ्चालन नगरी जनजीवनमा प्रतिकूल असर पर्ने गरी यातायात सेवा अवरूद्ध गरेमा नेपाल सरकारले त्यस्ता सवारीहरूको बाटो इजाजतपत्र बढीमा एक महीना सम्मको लागि स्थगित गर्न सक्नेछ ।

(३) उपदफा (२) बमोजिम बाटो इजाजतपत्र स्थगित अवधिको नवीकरण दस्तुर मिनाहा हुनेछ ।

८७. **बाटो इजाजतपत्र रद्द गर्न सकिने** : यस ऐनबमोजिम बाटो इजाजतपत्र लिएको कुनै सार्वजनिक सवारी चलाउन नसकिने गरी बिग्रिए वा नासिएमा त्यस्तो सवारीको धनी वा व्यवस्थापकले सोको प्रमाण संलग्न राखी बाटो इजाजतपत्रको मान्यता रद्द गराउन अधिकार प्राप्त अधिकारी समक्ष दरखास्त दिनु पर्छ ।

८८. **बाटो इजाजतपत्रको प्रतिलिपि दिने** : (१) बाटो इजाजतपत्र हराएमा, च्यातिएमा, झुत्रो भई नबुझिने भएमा वा अन्य कुनै कारणबाट नासिएमा सो भए गरेको मितिले सात दिनभित्र सवारी धनी वा व्यवस्थापकले बाटो इजाजतपत्रको प्रतिलिपिको लागि तोकिएको ढाँचामा तोकिएको दस्तुर समेत संलग्न राखी सम्बन्धित अधिकार प्राप्त अधिकारी समक्ष दरखास्त दिनु पर्छ ।

(२) उपदफा (१) बमोजिम परेको दरखास्त उपर अधिकार प्राप्त अधिकारीले आवश्यक जाँचबुझ गरी ब्यहोरा ठीक देखेमा दरखास्तवालालाई बाटो इजाजतपत्रको प्रतिलिपि दिनेछ ।

✚ पहिलो संशोधनद्वारा थप ।

(३) उपदफा (२) बमोजिम बाटो इजाजतपत्रको प्रतिलिपि जारी गरेको सूचना अधिकार प्राप्त अधिकारीले सम्बन्धित प्रहरी कार्यालयलाई दिनेछ ।

८९. **जाँचपास गराउनु पर्ने** : (१) कुनै पनि सार्वजनिक सवारीको बाटो इजाजतपत्र लिन यस ऐन बमोजिम त्यस्तो सवारीको जाँचपास गराएको हुनु पर्छ ।

(२) उपदफा (१) बमोजिम जाँचपास नगराई कुनै पनि सार्वजनिक सवारीको लागि बाटो इजाजतपत्र दिइने छैन ।

९०. **जाँचपासको लागि दरखास्त** : जाँचपास गराउन चाहने सार्वजनिक सवारीको धनी वा व्यवस्थापकले जाँचपासको लागि तोकिएको ढाँचामा तोकिएको दस्तुर समेत संलग्न राखी अधिकार प्राप्त अधिकारी समक्ष दरखास्त दिनु पर्छ ।

९१. **जाँचपासको प्रमाणपत्र दिनुपर्ने** : (१) दफा ९० बमोजिम दरखास्त परेमा अधिकार प्राप्त अधिकारीले त्यस्तो सार्वजनिक सवारी जाँच्न लगाई त्यस्तो सवारीको यान्त्रिक स्थिति र स्वरूप ठीक देखिएमा तोकिएको ढाँचामा जाँचपासको प्रमाणपत्र दिनु पर्छ ।

(२) उपदफा (१) बमोजिम दिइने जाँचपासको प्रमाणपत्रको मान्यता छ महीनासम्मको लागि हुनेछ ।

९२. **पुनः जाँचपास गराउनु पर्ने** :(१) दफा ९१ को उपदफा (२) मा लेखिएको म्याद नाघेको मितिले सात दिनभित्र अधिकार प्राप्त अधिकारी समक्ष पुनः जाँचपासको लागि दरखास्त दिई जाँचपास गराउनु पर्छ ।

(२) उपदफा (१) मा लेखिएको म्यादसम्म पुनः जाँचपास नगराएमा सो म्याद नाघेको मितिले पैंतीस दिनभित्र त्यस्तो सवारी जाँचपास गराउन ल्याएमा जाँचपासको लागि लाग्ने दस्तुरको अतिरिक्त शत प्रतिशत थप दस्तुर समेत लिई त्यस्तो सवारी जाँचपास गरी दिनु पर्छ ।

(३) उपदफा (२) बमोजिमको म्यादभित्र पनि जाँचपास नगराएमा त्यस्तो जाँचपासको प्रमाणपत्र स्वतः रद्द हुनेछ । यसरी जाँचपासको प्रमाणपत्र रद्द भएको सार्वजनिक सवारी पुनः जाँचपास गराउन ल्याएमा सवारी धनी वा व्यवस्थापकबाट उपदफा (२) बमोजिमको दस्तुरको अतिरिक्त पाँचहजार रुपैयाँसम्म जरिवाना लिई त्यस्तो सवारी पुनः जाँचपास गरी जाँचपासको प्रमाणपत्र दिनु पर्छ ।

९३. **यातायात सेवाको नाम पञ्जीकृत गर्नु पर्ने** : (१) यातायात सेवाको नाम विभागमा पञ्जीकृत नगरी सवारी धनी वा व्यवस्थापकले कुनै पनि सार्वजनिक सवारी यातायात सेवा सञ्चालन गर्ने कार्यमा प्रयोग गर्नु हुँदैन ।

(२) यातायात सेवाको नाम विभागमा पञ्जीकृत गर्न चाहने सवारी धनी वा व्यवस्थापकले त्यस्तो सेवा पञ्जीकरणको लागि तोकिएको ढाँचामा तोकिएको दस्तुर समेत संलग्न राखी विभाग समक्ष दरखास्त दिनु पर्छ ।

(३) उपदफा (२) बमोजिम परेको दरखास्त उपर विभागले आवश्यक जाँचबुझ गरी त्यस्तो यातायात सेवाको नाम पञ्जीकृत गर्न उपयुक्त देखेमा सो नामबाट यातायात सेवा सञ्चालन गर्न दरखास्तवालालाई अनुसूची -८ बमोजिमको ढाँचामा अनुमतिपत्र दिनेछ । त्यसरी यातायात सेवा सञ्चालन गर्न अनुमतिपत्र प्राप्त सवारी धनी वा व्यवस्थापकले त्यस्तो यातायात सेवा प्रदान गर्ने कार्य बन्द गर्न चाहेमा विभागको पूर्व स्वीकृति लिनु पर्छ ।

(४) उपदफा (३) बमोजिम दिइएको अनुमतिपत्र सो दिइएको मितिले पाँच वर्षसम्म बहाल रहनेछ ।

(५) यस दफा बमोजिम पञ्जीकृत यातायात सेवामा काम गर्ने कर्मचारीहरूको नियुक्ति, सेवाका शर्त र सुविधा सम्बन्धी व्यवस्था तोकिए बमोजिम हुनेछ ।

९४. **यातायात सेवा सञ्चालन गर्ने अनुमतिपत्रको नवीकरण** : (१) दफा ९३ को उपदफा (४) बमोजिमको म्याद नाघेको तीन महीनाभित्र यातायात सेवा सञ्चालन गर्न दिइएको अनुमतिपत्र नवीकरण गरी सक्नु पर्छ ।

(२) सवारी धनी, व्यवस्थापक वा निजहरूले खटाएको व्यक्तिले उपदफा (१) बमोजिम अनुमतिपत्र नवीकरण गराउनको लागि तोकिए बमोजिमको ढाँचामा दस्तुर सहित विभाग समक्ष दरखास्त दिनु पर्छ ।

(३) उपदफा (२) बमोजिम नवीकरणको लागि दरखास्त परेमा विभागले त्यस्तो अनुमतिपत्र अर्को पाँचवर्षको लागि नवीकरण गर्नु पर्छ ।

(४) उपदफा (१) बमोजिमको म्याद नाघी त्यस्तो अनुमतिपत्र नवीकरण गराउन आउने सवारी धनी वा व्यवस्थापकबाट सो म्याद नाघेको एक महीनासम्म नवीकरण दस्तुरको अतिरिक्त शत प्रतिशत थप दस्तुर लिई नवीकरण गरिनेछ ।

९५. **यातायात सेवा सञ्चालन गर्ने अनुमतिपत्र स्वतः रद्द हुने** : (१) दफा ९४ को उपदफा (४) बमोजिम निर्धारित अवधि भित्र यातायात सेवा सञ्चालन गर्ने अनुमतिपत्र नवीकरण नगराएमा त्यस्तो अनुमतिपत्र स्वतः रद्द हुनेछ ।

(२) उपदफा (१) बमोजिम रद्द भएको अनुमतिपत्रको लगत कट्टा हुनेछ ।

(३) उपदफा (२) बमोजिम लगत कट्टा भईसकेको अनुमतिपत्र पुनः नवीकरण गरिने छैन ।

९६. **भाडा निर्धारण गर्ने** : (१) कुनै बाटोमा यातायात सेवा सञ्चालन गर्ने यात्रीबाहक तथा मालबाहक सार्वजनिक सवारीले लिने भाडा दर तोकिए बमोजिम हुनेछ ।

(२) यात्रीले आफूसँग निःशुल्क लैजान पाउने यात्रीगुण्टाको अधिकतम वजन र सो बाहेक भाडा तिरी आफूसँग लैजान पाउने यात्रीगुण्टाको अधिकतम वजन तथा भाडा तोकिए बमोजिम हुनेछ ।

(३) यस दफाबमोजिम तोकिएको भाडा दर भन्दा बढी हुने गरी भाडा लिनु हुँदैन ।

९७. **परिचयपत्र नभ्रुण्ड्याएको व्यक्तिले यात्री टिकट बेच्न नहुने** : सार्वजनिक सवारीको यात्री टिकट बेच्ने कार्यमा संलग्न व्यक्तिले त्यस्तो सार्वजनिक सवारी सञ्चालन गर्ने पञ्जीकृत यातायात सेवाको कर्मचारी परिचयपत्र नभ्रुण्ड्याई त्यस्तो यातायात सेवाको नामबाट यात्री टिकट बेच्न हुँदैन ।

९८. **यात्री टिकटको ढाँचा** : (१) सार्वजनिक सवारीको यात्री टिकटको ढाँचा तोकिए बमोजिम हुनेछ ।

(२) उपदफा (१) बमोजिम यात्री टिकट बेच्ने व्यक्तिले टिकटमा सम्बन्धित यातायात सेवाको छाप लगाएको हुनु पर्छ ।

९९. **माल ढुवानी गर्दा माल ढुवानीको विवरण सहितको बील दिनु पर्ने** : मालबाहक सार्वजनिक सवारीले कुनै पनि किसिमको माल ढुवानी गर्दा मालसामानको धनीलाई त्यस्तो मालसामानको विवरण सहित उल्लेख गरिएको माल ढुवानीको बील दिनु पर्छ । त्यसरी दिइने बीलको ढाँचा तोकिए बमोजिम हुनेछ ।

१००. **यात्री-सूची तयार गर्नु पर्ने** : विभागले तोके बमोजिमको मध्यम बाटो वा लामो बाटोमा यातायात सेवा सञ्चालन गर्ने व्यवस्थापक वा सवारी धनीले आफ्नो सवारीमा

यात्रा गर्ने सबै यात्री, चालक, परिचालक, सुरक्षाकर्मी तथा सो सवारीमा काम गर्ने अन्य कर्मचारी समेतको नाम, उमेर र ठेगाना स्पष्ट खुलाई यात्री-सूची तयार गर्नु पर्छ । त्यसरी तयार गरिएको यात्री सूचीको एक प्रति आफूसँग राखी अर्को प्रति अधिकार प्राप्त अधिकारी वा निजले तोकेको व्यक्ति समक्ष सो सवारी गन्तव्य स्थानतर्फ प्रस्थान गर्नु अगावै पेश गर्नु पर्छ ।

१०१. **यात्री र मालसामान सुरक्षित रूपमा पुऱ्याउनु पर्ने** : (१) सार्वजनिक यातायात सेवाका धनी वा व्यवस्थापकले मालसामान वा यात्रीको जिम्मा लिएपछि यात्राको शुरूदेखि गन्तव्य स्थानसम्म निर्धारित समयभित्र सुरक्षासाथ पुऱ्याउनु निजको कर्तव्य हुनेछ ।

तर यात्रीलाई असुविधा हुने गरी गन्तव्य स्थानमा पुग्ने समय निर्धारण गर्न हुँदैन ।

(२) कुनै सार्वजनिक सवारी विग्रेमा वा दैवी परी सवारी अघि बढाउन नसकिने भएमा पनि यात्रीको सुविधालाई ध्यान पुऱ्याउनु र सवारीमा रहेको मालसामानको सुरक्षा गर्नु त्यस्तो सवारीको चालक, परिचालक, सुरक्षाकर्मी वा अन्य कर्मचारीको अनिवार्य दायित्व हुनेछ ।

(३) उपदफा (२) मा लेखिएको अवस्था परी सवारी अघि बढाउन नसकिने भएमा पनि सवारी धनी वा व्यवस्थापकले यात्रीहरूलाई गन्तव्य स्थानसम्म पुऱ्याउने व्यवस्था गर्नु पर्नेछ ।

१०२. **सीटभन्दा बढी यात्री राख्न नहुने** : यात्रीबाहक सार्वजनिक सवारीमा सो सवारीको दर्ताको प्रमाणपत्रमा लेखिएको सीट सङ्ख्या भन्दा बढी यात्री राखी चलाउन हुँदैन ।

१०३. **यात्रा विश्राम गर्नु पर्ने** : चार घण्टा भन्दा बढीको दूरीमा चल्ने यात्रीबाहक सार्वजनिक सवारीले प्रत्येक चार घण्टामा एकपटक आधाघण्टा विश्राम गर्नु पर्छ ।

१०४. **चालकको पालो फेर्नु पर्ने** : लामो बाटोमा यातायात सेवा सञ्चालन गर्ने यात्रीबाहक सार्वजनिक सवारीमा कम्तिमा दुईवटा चालक अनिवार्य रूपमा राखी प्रत्येक ✻छ घण्टापछि पालै पालोसँग सवारी चलाउन लगाउने कर्तव्य यातायात सेवा सञ्चालन गर्ने व्यवस्थापक वा सवारी धनीको हुनेछ ।

✻ पहिलो संशोधनद्वारा संशोधित ।

१०५. **<u>टिकट नलिई यात्रा गर्नमा प्रतिबन्ध</u>** : कुनै पनि यात्रीले आफूले यात्रा गर्ने गन्तव्य स्थानसम्मको लागि तोकिएको भाडा तिरी लिएको टिकट साथमा नलिई यात्रा गर्नु हुँदैन ।

१०६. **<u>बाटोको नक्सा र समय तालिकाको जानकारी गराउने</u>** : (१) अधिकार प्राप्त अधिकारीले प्रत्येक बस बिसौनीमा सो बस बिसौनीबाट प्रस्थान गर्ने गन्तव्य स्थानको बाटोको नक्सा र सार्वजनिक सवारी प्रस्थान गर्ने समय तथा गन्तव्य स्थानमा पुग्ने समय तालिका जानकारीको लागि टाँस्न वा जडान गर्न लगाउनु पर्छ ।

(२) उपदफा (१) बमोजिम टाँसिएको वा जडान गरिएको बाटो, नक्सा वा समय तालिकामा कुनै फेरबदल भएमा अधिकार प्राप्त अधिकारी वा निजले खटाएको व्यक्तिले सोको सूचना तुरून्त यात्रीहरूलाई दिने व्यवस्था गर्नु पर्छ ।

१०७. **<u>सीट सुरक्षित राख्नु पर्ने</u>** : (१) स्थानीय बाटोमा चल्ने यात्रीबाहक सार्वजनिक ठूलो सवारीमा चारवटा सीट अशक्त व्यक्तिका लागि र दुईवटा सीट महिलाहरूका लागि सुरक्षित राख्नु पर्ने कर्तव्य सो यातायात सेवा सञ्चालन गर्ने व्यवस्थापक वा सवारी धनीको हुनेछ ।

(२) लामो बाटोमा चल्ने यात्रीबाहक सार्वजनिक सवारीमा दुईवटा सीट संसद सदस्यका लागि र दुईवटा सीट महिलाहरूका लागि सुरक्षित राख्नु पर्ने कर्तव्य सो यातायात सेवा सञ्चालन गर्ने व्यवस्थापक वा सवारी धनीको हुनेछ ।

तर त्यस्तो सीट त्यस्तो सवारी गन्तव्य स्थानतर्फ प्रस्थान गर्ने चारघण्टा अघिसम्म मात्र सुरक्षित राखिनेछ ।

(३) उपदफा (२) बमोजिम ⏭<u>संविधान सभा सदस्यले</u> खरिद गरेको टिकट अन्य कुनै यात्रीको नाममा हस्तान्तरण हुन सक्ने छैन ।

१०८. **<u>सुरक्षाकर्मी राख्न सकिने</u>** : मध्यम बाटो र लामो बाटोमा यात्रीबाहक सार्वजनिक यातायात सेवा सञ्चालन गर्ने व्यवस्थापक वा सवारी धनीले सो सवारी तथा यात्रीहरूको सुरक्षाको निमित्त सो सवारीमा सुरक्षाकर्मी उपलव्ध गराई दिन नेपाल सरकारसँग अनुरोध गरेमा वा नेपाल सरकारले त्यस्तो सवारीमा सरकारी सुरक्षाकर्मी तैनाथ गर्नु पर्ने आवश्यकता देखेमा लाग्ने दस्तुर लिई आवश्यक सङ्ख्यामा सुरक्षाकर्मी उपलव्ध गराउन सक्नेछ ।

---

⏭ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६६ द्वारा संशोधित ।

१०९. **अनुचित व्यवहार गर्न नहुने** : कसैले पनि यात्री, चालक, परिचालक तथा सुरक्षाकर्मीसँग अनुचित व्यवहार गर्नु हुँदैन ।

११०. **सार्वजनिक सवारीमा धूम्रपान गर्न नहुने** : सार्वजनिक सवारीमा धूम्रपान गर्न हुँदैन ।

१११. **चालकसँग कुरा गर्न नहुने** : सार्वजनिक सवारी चलिरहेको समयमा कसैले पनि सो सवारीको चालकसँग कुरा गर्न वा निजलाई सवारी चलाउने कार्यमा बाधा पुग्ने कुनै कार्य गर्न वा गराउन हुँदैन ।

११२. **फेला परेको मालसामान बुझाउनु पर्ने** : सार्वजनिक सवारीमा फेला परेको कुनै पनि मालसामान सो फेला परेको चौवीस घण्टाभित्र तत्काल कार्यरत सो सवारीको कर्मचारीले सवारी धनी वा व्यवस्थापकलाई बुझाउनु पर्छ । त्यसरी फेला परेको मालसामान सवारी धनी वा व्यवस्थापकले आफूलाई प्राप्त हुन आएको चौबीस घण्टाभित्र अधिकार प्राप्त अधिकारी वा नजिकको यातायात व्यवसायी संघको कार्यालयमा बुझाउनु पर्छ ।

११३. **यात्री लिन इन्कार गर्न नहुने** : मध्यम वा लामो बाटोमा चल्ने वा एक्सप्रेस यातायात सेवा प्रदान गर्ने सार्वजनिक सवारी बाहेक अन्य सार्वजनिक सवारीले सवारी खालीरहेको अवस्थामा यात्री लिन इन्कार गर्न पाउने छैन ।

११४. **नेपाल सरकारको विशेष अधिकार** : यस ऐनमा अन्यत्र जुनसुकै कुरा लेखिएको भएतापनि कुनै सार्वजनिक सवारीलाई कुनै खास अवधिसम्मको लागि कुनै ठाउँमा यातायात सेवा सञ्चालन गर्नु पर्ने गरी सवारी धनी वा व्यवस्थापकलाई नेपाल सरकारले आदेश दिन सक्नेछ ।

## परिच्छेद- ७

## आवागमन नियन्त्रण

११५. **सवारीको गति निर्धारण** : (१) विभागले कुनै सार्वजनिक स्थानका सम्बन्धमा सवारी चलाउने गति निर्धारण गर्न आवश्यक देखेमा सो स्थानमा सवारीको गति निर्धारण गरी सो भन्दा बढी वेगमा सवारी चलाउन निषेध गर्न सक्नेछ । यसरी गति निर्धारण गरिएको स्थानमा सो निर्धारित गतिभन्दा बढी वेगले सवारी चलाउन हुँदैन ।

(२) उपदफा (१) बमोजिम गति निर्धारण गरी बढी वेगमा सवारी चलाउन निषेधित सार्वजनिक स्थानमा निर्धारित गति सम्बन्धी सूचना वा सङ्केत विभागले टाँस्न वा जडान गर्न लगाउनु पर्छ ।

(३) दमकल, एम्बुलेन्स तथा बिरामी लैजाने कामको सिलसिलामा चलाइएको सवारीको हकमा उपदफा (१) लागू हुने छैन ।

तर त्यस्तो सवारीले सडकमा हिड्ने बटुवा तथा अन्य सवारीलाई सचेत गर्नको निम्ति विशेष किसिमको ध्वनी तथा बत्तीको प्रयोग गर्नु पर्छ ।

**११६. सवारीको वजन** : विभागले कुनै सार्वजनिक स्थानको सम्बन्धमा सवारीको वजनको हद निर्धारण गर्न सक्नेछ । यसरी सवारीको वजनको हद निर्धारण गरिएको भए त्यसरी निर्धारित वजन भन्दा बढी हुने गरी त्यस्तो सार्वजनिक स्थानमा कसैले सवारी चलाउन वा चलाउन लगाउन हुँदैन ।

**११७. सवारीमा राखिने मानिस र मालसामानको हद तोक्ने** : (१) सार्वजनिक सवारीमा राख्न सकिने मानिसको सङ्ख्या र मालसामानको वजन विभागले निर्धारण गरी सोको सूचना सर्वसाधारणको जानकारीको लागि प्रकाशित गर्नु पर्छ ।

(२) उपदफा (१) बमोजिम निर्धारित मानिसको संङ्ख्या र मालसामानको वजनभन्दा बढी हुने गरी कुनै पनि सवारीमा मानिस वा मालसामान राख्न हुँदैन ।

**११८. सवारी चलाउन प्रतिबन्ध लगाउने** : यस ऐनमा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि विभागले सार्वजनिक सुरक्षा तथा सर्वसाधारणको भलाईको निमित्त कुनै सार्वजनिक स्थानमा कुनै सवारी चलाउनमा प्रतिबन्ध लगाउन सक्नेछ । यसरी प्रतिबन्ध लगाइएकोमा विभागले सो कुराको सूचना त्यस्तो स्थानमा टाँस्न, टाँग्न वा जडान गर्न लगाउनु पर्छ ।

**११९. ट्राफिक सङ्केत टाँस्ने, टाँग्ने वा जडान गर्ने** : (१) विभागले आवश्यक देखेको सार्वजनिक स्थानहरूमा अन्तर्राष्ट्रिय प्रचलन अनुरूपको रंग, आकार र नमूना बमोजिमको आवश्यक ट्राफिक सङ्केतहरू टाँस्न, टाँग्न वा जडान गर्न लगाउनु पर्छ ।

(२) उपदफा (१) बमोजिम टाँसिएको, टाँगिएको वा जडान गरिएको ट्राफिक सङ्केतहरू विभाग वा विभागले खटाएको व्यक्ति बाहेक अरू कसैले सो स्थानबाट हटाउन, बदल्न, हेरफेर गर्न, मेट्न, च्यात्न वा केरमेट गर्न हुँदैन ।

१२०. **<u>ट्राफिक सङ्केतको पालन गर्नु पर्ने</u>** : (१) चालकले सवारी चलाउँदा ट्राफिक सङ्केतको पालन गरी सवारी चलाउनु पर्छ ।

(२) चालकले पालन गर्नु पर्ने ट्राफिक सङ्केतहरू तोकिए बमोजिम हुनेछन् ।

१२१. **<u>पार्किङ्ग स्थान तथा बस बिसौनी निर्धारण गर्ने</u>** : अधिकार प्राप्त अधिकारीले गाउँ, नगर तथा जिल्लाका स्थानीय निकायका पदाधिकारीहरूसँग परामर्श गरी मूल सडकको आवागमनमा प्रतिकूल असर नपर्ने गरी पार्किङ्गस्थल तथा बस बिसौनीहरू निर्धारण गर्नु पर्छ ।

१२२. **<u>सवारीलाई खतरा हुने किसिमबाट राख्न नहुने</u>** : (१) कुनै पनि सवारी अरू कुनै सवारी वा व्यक्तिलाई खतरा, बाधा वा असुविधा हुने गरी कुनै सार्वजनिक स्थानमा राख्न हुँदैन ।

(२) कुनै सवारी चलाउँदा चलाउँदैको अवस्थामा बिग्रिएमा त्यस्तो सवारी तत्काल अन्यत्र लान सकिने स्थिति नभएमा दुर्घटना नहुने किसिमबाट सडकको बायाँ किनारा लगाई राखी रात्रीको समयमा त्यस्तो सवारीलाई अन्य सवारीले टाढैबाट देख्न सक्ने गरी रातो बत्ती वा रिफ्लेक्टर लगाई राख्नु पर्छ ।

१२३. **<u>सवारीको अन्य भागमा मानिस राख्न नहुने</u>** : कुनै सवारी चालक वा सवारी धनी वा व्यवस्थापकले लामो एवं मध्यम बाटोमा चल्ने सवारीमा मानिस बस्न बनेको सीट बाहेक सवारीको अन्य भागमा र स्थानीय बाटोमा चल्ने सवारीमा मानिस बस्न बनेको सीट एवं भित्री भाग बाहेक अन्य भागमा मानिस राखी सवारी चलाउन वा चलाउन लगाउन  हुँदैन ।

१२४. **<u>चालकलाई बाधा पुग्ने काम गर्न नहुने</u>** : कसैले चालकको क्षेत्र (ड्राईभर केवीन) भित्र चालकलाई प्रत्यक्ष वा अप्रत्यक्ष रूपमा बाधा पुग्ने गरी मालसामान राखी वा आफू उभीई वा अन्य कुनै प्रकारबाट बाधा पुग्ने किसिमको व्यवहार गर्न हुँदैन ।

१२५. **<u>आवागमनमा बाधा पार्न नहुने</u>** : कुनै पनि सार्वजनिक स्थानमा कुनै पनि मानिस वा सवारीको आवागमनमा बाधा पुग्ने गरी मालसामान वा सवारी राख्न हुँदैन ।

तर कुनै विशेष परिस्थिति परी कुनै सार्वजनिक स्थानमा केही समयको लागि कुनै मालसामान राख्नुपर्ने भएमा नजीकको प्रहरी कार्यालयलाई सोको जानकारी दिई त्यस्तो कार्यालयको स्वीकृति लिनु पर्छ ।

१२६. **सार्वजनिक स्थानमा खाल्टो खन्दा साङ्केतिक चिन्ह राख्नु पर्ने** : (१) कुनै पनि सार्वजनिक स्थानमा कुनै काम परी खाल्टो खन्दा नजिकको प्रहरी कार्यालयको पूर्व स्वीकृति लिनु पर्छ ।

(२) उपदफा (१) बमोजिम सार्वजनिक स्थानमा खाल्टो खन्ने स्वीकृति दिंदा सो स्थानमा दुर्घटना नहुने किसिमबाट साङ्केतिक चिन्ह राख्न लगाउनु पर्छ ।

१२७. **सवारीमा सांकेतिक चिन्ह राख्नु पर्ने** : कुनै पनि किसिमको खतरापूर्ण मालसामान ढुवानी गर्ने कार्यमा संलग्न मालबाहक सार्वजनिक सवारीमा त्यस्तो मालसामान रहेको कुरा अन्य सवारी तथा सर्वसाधारणको जानकारीको लागि सांकेतिक चिन्ह देखिने गरी राख्नु पर्छ ।

१२८. **सवारीलाई मार्ग परिवर्तन गर्न र यात्रीलाई बन्धक बनाउन नहुने** : (१)चालकले आफ्नो सवारी निर्दिष्ट मार्गमा चलाई रहेको समयमा सो सवारीलाई अन्य मार्गबाट लैजान कुनै पनि व्यक्तिले डर, त्रास देखाउन वा कुनै किसिमको शक्तिको प्रयोग गर्न वा गराउन हुँदैन ।

(२) कसैले सवारीमा रहेका कुनै पनि व्यक्तिलाई बन्धक बनाई त्यस्तो सवारी वा बन्धक बनाइएको व्यक्तिको मुक्तिको लागि कुनै पनि किसिमको माग राख्नु हुँदैन ।

१२९. **दुर्घटनामा परेका सवारी र यात्रीको हानि नोक्सानी गर्न नहुने** : कुनै सवारी दुर्घटनामा परी हताहत वा घाइते भएका यात्री तथा सवारीमा काम गर्ने कुनै व्यक्तिलाई पिट्न वा तिनीहरूको मालसामानको हिनामिना गर्न, खोस्न वा तिनीहरूलाई कुनै पनि किसिमले हानि नोक्सानी पुऱ्याउनु हुँदैन ।

१३०. **सवारी चलाउँदा सुरक्षापेटी तथा हेल्मेट लगाउनु पर्ने** : (१) तोकिए बमोजिमको सवारी चलाउँदा चालक तथा सवारीको अघिल्लो सीटमा बस्ने व्यक्तिले सुरक्षापेटी बाँध्नु पर्छ ।

(२) मोटर साइकल तथा अन्य त्यस्तै दुई पाङ्ग्रे सवारी चलाउँदा चालकले तथा सो सवारीमा बस्ने मानिसले सुरक्षा टोप (हेल्मेट) लगाउनु पर्छ ।

१३१. **खोजेको बेला देखाउनु पर्ने** : (१) कुनै पनि चालकले चालक अनुमतिपत्र प्रहरी वा यातायात निरीक्षकले जाँचबुझको सिलसिलामा हेर्न खोजेमा देखाउनु पर्छ ।

(२) प्रहरी वा यातायात निरीक्षकले जाँचबुझको सिलसिलामा कुनै सवारीको दर्ताको प्रमाणपत्र वा सार्वजनिक सवारीको बाटो इजाजतपत्र हेर्न खोजेमा त्यस्तो सवारीको चालक, सवारी धनी वा व्यवस्थापकले दर्ताको प्रमाणपत्र वा बाटो इजाजतपत्र देखाउनु पर्छ ।

१३२. **सवारी रोक्नु पर्ने** : चालकले आफूले चलाइरहेको सवारी देहायको अवस्थामा रोकी आवश्यकतानुसार उचित समयसम्म अड्याई राख्नु पर्छ :-

(क) प्रहरी वा यातायात निरीक्षकले सवारी रोक्न सङ्केत गरेमा वा आदेश दिएमा ।

(ख) कुनै जनावर झस्की वा तर्सी बेकाबु हुने संभावना भई सो जनावर तत्काल जिम्मामा रहेको व्यक्तिले सवारी रोक्न सङ्केत गरेमा वा अनुरोध गरेमा ।

(ग) सवारी दुर्घटनाग्रस्त भई कुनै मानिस, जनावर वा सम्पत्तिको हानि नोक्सानी भएकोमा ।

(घ) जेब्रा क्रसिङमा मानिस ओहर दोहर गरेको अवस्थामा वा दोबाटो वा चौबाटोमा रहेको ट्राफिक बत्तीले रोक्ने सङ्केत गरेकोमा ।

१३३. **दुर्घटना भएमा चालकको कर्तव्य** : (१) कुनै सवारीले कुनै दुर्घटना गरी मानिसको जीउ ज्यानमा कुनै किसिमको खतरा वा चोट पटक पर्न गएको रहेछ भने सो सवारीको चालक, परिचालक, सुरक्षाकर्मी वा सो सवारीमा काम गर्ने अन्य कर्मचारीले त्यस्तो मानिसको उपचारको लागि तुरून्त आवश्यक व्यवस्था गर्नु पर्छ ।

(२) उपदफा (१) बमोजिम सवारी दुर्घटनाग्रस्त भएको स्थानमा कुनै प्रहरी नभएमा चालकले तुरून्त सो दुर्घटनाको जानकारी तथा विवरण नजीकको प्रहरी कार्यालयलाई दिनु पर्छ । कुनै प्रहरीले दुर्घटनाको सम्बन्धमा सम्बन्धित सवारी चालकसँग कुनै कुराको सोधपुछ गरेमा निजले सोधिएको सबै कुरा बताउनु पर्छ ।

१३४. **दुर्घटना परेको सवारीको निरीक्षण** : दुर्घटनाको जाँचबुझको निमित्त सो दुर्घटना गर्ने वा सो दुर्घटनामा पर्ने सवारीको निरीक्षण गर्न आवश्यक देखेमा सम्बन्धित प्रहरीले त्यस्तो सवारी आफू समक्ष दाखिल गर्न लगाई वा त्यस्तो सवारी रहेको ठाउँमा गई निरीक्षण गर्न सक्नेछ ।

१३५. **सवारी बायाँतिरबाट चलाउनु पर्ने** : (१) कुनै पनि सार्वजनिक स्थानमा सवारी चलाउँदा चालकले तोकिएको स्थानमा बाहेक अन्य स्थानमा वायाँ किनारा च्यापी चलाउनु पर्छ ।

(२) अगाडि गईरहेको सवारीलाई उछिनी जानु परेमा संकेत दिई उक्त सवारीको चालकले अगाडि जान संकेत दिएपछि मात्र पछाडिको सवारीले दाहिने तिरबाट उछिनी जानु पर्छ । यसरी पछाडिको सवारीले उछिनी जानको लागि संकेत दिएमा अगाडिको सवारीले अवस्था हेरी अगाडि जानको निमित्त पछाडिको सवारीलाई संकेत दिनु पर्छ ।

१३६. **पेटीबाट हिंड्नु पर्ने** : मानिस हिंड्ने पेटी भएको सडकमा मानिसहरू सो पेटीबाट नै हिंड्नु पर्छ । पेटी नभएको सडकमा हिंड्दा सो सडकको किनारा च्यापी हिड्ने गर्नु पर्छ ।

१३७. **निर्धारित ठाउँबाट बाटो काट्नु पर्ने** : पैदल हिंड्ने मानिसले बाटो काट्नु पर्दा जेब्रा क्रसिङ्ग, सब-वे, ओभरहेड ब्रीज वा त्यस्तो बाटो काट्नको लागि निर्धारित गरिएको ठाउँबाट मात्र बाटो काट्नु पर्छ ।

१३८. **पाल्तु पशुपन्छी छाड्न नहुने** : सवारी चलाउन वा मानिस हिंड्नलाई बाधा पर्ने गरी कुनै पनि घर पालुवा पशुपन्छी सार्वजनिक स्थानमा छाड्न हुँदैन ।

१३९. **जानकारी दिनुपर्ने** : (१) अधिकार प्राप्त अधिकारी, यातायात निरीक्षक वा प्रहरीले कुनै सवारीको सम्बन्धमा मागेको कुनै पनि जानकारी सो सवारीको धनीले निजहरूलाई दिनु पर्छ ।

(२) उपदफा (१) बमोजिमको जानकारी सार्वजनिक सवारी वा त्यसको चालक, परिचालक, सुरक्षाकर्मी वा त्यस्तो सवारीमा काम गर्ने कुनै कर्मचारीसँग सम्बन्धित भएमा त्यस्तो सार्वजनिक सवारीको धनी वा व्यवस्थापकले त्यसरी मागिएको जानकारी अधिकार प्राप्त अधिकारी वा यातायात निरीक्षक वा प्रहरीलाई यथाशीघ्र दिनु पर्छ ।

१४०. **घुम्ती निरीक्षक** : (१) यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियमको पालना गरे नगरेको निरीक्षण गर्न प्रहरी वा यातायात निरीक्षकले आवश्यकता अनुसार घुम्ती निरीक्षण गर्न सक्नेछ ।

(२) उपदफा (१) बमोजिम घुम्ती निरीक्षण गर्दा प्रहरी वा यातायात निरीक्षकले दफा १६४ मा उल्लेख भए बमोजिमको काम कारवाही भएको देखेमा त्यस्तो गर्ने व्यक्तिलाई तत्काल सो दफामा लेखिए बमोजिमको सजाय गर्न सक्नेछ ।

**१४१. चालकले आफ्नो अनुमतिपत्र अरूलाई दिन नहुने** : कुनै पनि चालकले अरूलाई सवारी चलाउनको निमित्त आफ्नो अनुमतिपत्र दिन हुँदैन ।

**१४२. मादक तथा अन्य लागू पदार्थ सेवन गर्न नहुने** : सवारी चलाउँदा चालकले मादक वा अन्य कुनै पनि प्रकारको लागू पदार्थ सेवन गर्न हुँदैन ।

**१४३. राती सवारी चलाउँदा बत्ती बाल्नु पर्ने** : कुनै पनि सवारी अँध्यारोमा वा कुहिरो लागेको बेलामा चलाउँदा सो सवारीको बत्ती बाल्नु पर्छ ।

**१४४. अवस्था ठीक नभएको सवारी चलाउन नहुने** : सवारीको कुनै पनि पार्ट पुर्जा बिग्री अवस्था ठीक नभएको सवारी चलाउन हुँदैन ।

**१४५. आवश्यक सहयोग पुऱ्याउने** : कुनै पनि सवारीले दुर्घटनामा परेको सवारी वा सवारीमा रहेका यात्रीहरूलाई आवश्यक सहयोग पुऱ्याउनु पर्छ ।

**१४६. प्रचार प्रसार गर्ने गराउने**: सवारी दुर्घटनाको रोकथाम गर्न ट्राफिक सङ्केतको जानकारी सर्वसाधारणलाई गराउनको निमित्त समय समयमा विभागले विभिन्न सञ्चार माध्यमबाट ट्राफिक सङ्केत सम्बन्धी कार्यक्रमहरू प्रसारित गर्ने व्यवस्था गर्नु पर्छ ।

**१४७. लापरवाहीसाथ सवारी चलाउन नहुने** : कुनै चालकले सवारी चलाउँदा लापरवाहीसाथ सवारी चलाउन हुँदैन ।

## परिच्छेद-८

## बीमा सम्बन्धी व्यवस्था

**१४८. सवारीको बीमा गराउनु पर्ने** : (१) सवारी धनी वा व्यवस्थापकले तोकिए बमोजिम प्रत्येक सवारीको बीमा गराउनु पर्छ ।

(२) उपदफा (१) बमोजिम बीमा नगरेको सवारीको दर्ताको प्रमाणपत्र नवीकरण गरिने छैन र त्यस्तो सवारी सार्वजनिक सवारी भए त्यस्तो सार्वजनिक

सवारीलाई यातायात सेवा सञ्चालन गर्न पञ्जीकृत गरिने र बाटो इजाजतपत्र प्रदान गरिने छैन ।

१४९. **चालक, परिचालक, सुरक्षाकर्मी तथा अन्य कर्मचारीको बीमा** : (१) यातायात सेवामा संलग्न प्रत्येक सार्वजनिक सवारीको चालक, परिचालक, सुरक्षाकर्मी तथा सो सवारीमा काम गर्ने अन्य कर्मचारीको तोकिएको रकमको दुर्घटना बीमा सवारी धनी वा व्यवस्थापकले गर्नु पर्छ ।

(२) सवारीको दुर्घटनाबाट चालक, परिचालक, सुरक्षाकर्मी तथा अन्य कर्मचारीको अङ्गभङ्ग वा मृत्यु भएमा सो बापत पाउने बीमित रकम निज स्वयं वा निजको नजीकको हकवालाले पाउनेछ ।

(३) उपदफा (१) बमोजिम चालक, परिचालक, सुरक्षाकर्मीको बीमा नगराई यातायात सेवा सञ्चालन गर्दा कुनै सार्वजनिक सवारी दुर्घटना हुन गई निजहरूलाई कुनै पनि किसिमको हानि नोक्सानी भएमा निजहरूले पाउनु पर्ने उपदफा (१) बमोजिमको बीमा रकम निजहरू वा निजहरूको हकवालालाई सवारी धनी वा व्यवस्थापकले क्षतिपूर्ति बापत दिनु पर्छ ।

१५०. **यात्रीको बीमा** : (१) तोकिएको बाटोमा यातायात सेवा सञ्चालन गर्ने सवारी धनी वा व्यवस्थापकले यात्रा गर्ने प्रत्येक यात्रीको तोकिएको रकमको दुर्घटना बीमा गराउनु पर्छ ।

(२) सवारी दुर्घटनाबाट यात्रीको अङ्गभङ्ग भएमा अङ्गभङ्ग भए बापतको दुर्घटना बीमाको रकम निजले पाउनेछ र सो दुर्घटनाबाट निजको मृत्यु भएमा निजको नजीकको हकवालाले सो बापत पाउनु पर्ने दुर्घटना बीमाको रकम पाउनेछ ।

(३) उपदफा (१) बमोजिम यात्रीको बीमा नगराई यातायात सेवा सञ्चालन गर्दा कुनै सार्वजनिक सवारी दुर्घटनाग्रस्त भई त्यसमा यात्रा गरिरहेका कुनै पनि यात्रीलाई कुनै पनि किसिमको हानि नोक्सानी भएमा निजले पाउनु पर्ने उपदफा (१) बमोजिमको बीमा रकम निज वा निजको हकवालालाई सवारी धनी वा व्यवस्थापकले क्षतीपूर्ति बापत दिनु पर्छ ।

१५१. **यात्रीगुण्टाको बीमा** : (१) तोकिएको बाटोमा यातायात सेवा सञ्चालन गर्ने सवारी धनी वा व्यवस्थापकले यात्रा गर्ने प्रत्येक यात्रीको यात्रीगुण्टाको तोकिएको रकमको बीमा गराउनु पर्छ ।

(२) यात्रीगुण्टाको वास्तविक मूल्य जतिसुकै भए तापनि त्यस्तो यात्रीगुण्टा कुनै कारणबाट हराए वा नष्ट भएमा उपदफा (१) बमोजिम गरिएको बीमा रकमभन्दा बढी हुने गरी दावी गरिएको क्षतिपूर्तिको रकम प्रति सवारी धनी वा व्यवस्थापक उत्तरदायी हुने छैन ।

(३) उपदफा (१) बमोजिम यात्रीगुण्टाको बीमा नगराई कुनै सार्वजनिक सवारीले यातायात सेवा सञ्चालन गर्दा कुनै यात्रीगुण्टा हराए वा नष्ट भएमा यात्रीले पाउनु पर्ने उपदफा (१) बमोजिमको बीमा रकम यात्री वा निजको हकवालालाई सवारी धनी वा व्यवस्थापकले क्षतीपूर्ति बापत दिनु पर्छ ।

१५२. **तेस्रो पक्षको बीमा** : (१) सवारीको दुर्घटनाबाट कुनै तेस्रो पक्ष वा निजको कुनै सम्पत्ति कुनै किसिमले नोक्सान भएमा सो नोक्सानीको क्षतीपूर्ति दिने प्रयोजनका लागि सवारी धनी वा व्यवस्थापकले तोकिएको रकमको तेस्रो पक्षको बीमा गराउनु पर्छ ।

(२) सवारी दुर्घटनाबाट कुनै तेस्रो पक्ष वा निजको कुनै सम्पत्ति नोक्सान भएमा सो नोक्सानीको क्षतीपूर्ति बापत उपदफा (१) बमोजिमको रकम निज वा निजको हकवालाले पाउनेछ ।

(३) उपदफा (१) बमोजिम तेस्रो पक्ष वा कम्प्रिहेन्सीभ बीमा नगराई चलाएको सवारी दुर्घटनाग्रस्त भई कुनै तेस्रो पक्ष वा निजको सम्पत्ति नोक्सान भएमा नोक्सानी बापत तेस्रो पक्ष वा निजको हकवालाले पाउनु पर्ने उपदफा (१) बमोजिमको बीमा रकम निज वा निजको हकवालालाई सवारी धनी वा व्यवस्थापकले क्षतिपूर्ति बापत दिनु पर्छ ।



## परिच्छेद- ९

## काम, कर्तव्य र अधिकार

१५३. **विभागको काम, कर्तव्य र अधिकार** : विभागको काम, कर्तव्य र अधिकार देहायबमोजिम हुनेछ :-

(क) संगठित एवं प्रभावकारी ढङ्गबाट यातायात सेवा सञ्चालन गराउन त्यसको आर्थिक तथा प्राविधिक पक्षमा अध्ययन तथा अनुसन्धान गर्ने वा गर्न लगाई तत्सम्बन्धी आवश्यक नीति निर्धारण गर्ने ।

(ख) यातायातको सुव्यवस्था र विकासको लागि यातायात सेवासँग सम्बन्धित व्यक्ति, फर्म, कम्पनी वा संस्थालाई आवश्यक निर्देशन दिने ।

(ग) आवश्यकता अनुसार मालसामान ढुवानीको प्राथमिकता तोकी सो प्राथमिकता अनुरूप मालसामान ढुवानी गर्न यातायात सेवासँग सम्बन्धित व्यक्ति, फर्म, कम्पनी वा संस्थालाई निर्देशन दिने ।

(घ) यातायात सेवा सञ्चालन गर्न यात्रीको चापलाई दृष्टिगत गरी आवश्यकता अनुसार बाटोको निर्धारण गरी सो बाटोमा चल्ने सार्वजनिक सवारीको भाडा निर्धारण गर्ने ।

(ङ) अन्तर्राष्ट्रिय प्रचलन अनुरूप ट्राफिक संकेतहरू सार्वजनिक स्थानमा राख्ने व्यवस्था गर्ने ।

(च) सवारीको गति, वजन र सवारीमा राखिने यात्री सङ्ख्या निर्धारण गर्ने ।

(छ) सवारीको यान्त्रिक स्थिति तथा स्वरूपको जाँचबुझको सम्बन्धमा आवश्यक मापदण्ड तयार र निर्धारण गर्ने ।

(ज) चालकहरूसँग लिइने परीक्षाको बिषय र परीक्षा प्रणाली तोक्ने ।

(झ) यातायात सेवाको सुदृढीकरणको निम्ति आवश्यक अन्य काम कारवाही गर्ने ।

**१५४.** **<u>यातायात व्यवस्थापन समिति</u>** : प्रत्येक क्षेत्रमा चल्ने सार्वजनिक सवारीहरूलाई व्यवस्थितरूपमा सञ्चालन गर्न देहायका सदस्यहरू भएको यातायात व्यवस्थापन समिति गठन गरिनेछ :-

| | | |
|---|---|---|
| (क) | प्रमुख जिल्ला अधिकारी (यातायात व्यवस्था कार्यालय रहेको जिल्ला) | - अध्यक्ष |
| (ख) | प्रमुख, जिल्ला प्रहरी कार्यालय | - सदस्य |
| (ग) | यातायात व्यवसायीहरूको प्रतिनिधि एकजना | - सदस्य |
| (घ) | यातायात मजदूरहरूको प्रतिनिधि एकजना | - सदस्य |
| (ङ) | प्रमुख, यातायात व्यवस्था कार्यालय | - सदस्य-सचिव |

**१५५.** **<u>यातायात व्यवस्थापन समितिको काम, कर्तव्य र अधिकार</u>** : यातायात व्यवस्थापन समितिको काम, कर्तव्य र अधिकार देहायबमोजिम हुनेछ :-

(क) आफ्नो क्षेत्रभित्र चल्ने यातायात सेवा निर्वाधरूपमा सञ्चालन गर्न सार्वजनिक सवारीहरूलाई यातायात सेवा सञ्चालन गर्ने कार्यमा संलग्न गराउने ।

(ख) आफ्नो क्षेत्रभित्र बाटो कायम नभएको ठाउँमा केही समयको लागि बाटो कायम गरी यातायात सेवा सञ्चालन गर्नु पर्ने भए अस्थायी बाटो कायम गरी सो बाटोमा चल्ने सार्वजनिक सवारीको भाडा निर्धारण गर्न विभागमा सिफारिस गर्ने ।

(ग) आफ्नो क्षेत्रभित्र सार्वजनिक सवारीहरूले बाटोको इजाजतपत्र लिई यातायात सेवा सञ्चालन गरे नगरेको, समय समयमा सो को नवीकरण गरे नगरेको निरीक्षण गर्ने वा गर्न लगाउने ।

(घ) आफ्नो क्षेत्रभित्र चल्ने सार्वजनिक सवारीहरूले समय समयमा जाँचपास गरे नगरेको र यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियमको अधीनमा रही नियमित यातायात सेवा प्रदान गरे नगरेको समय समयमा निरीक्षण गर्ने वा गर्न लगाउने ।

(ङ) आफ्नो क्षेत्रभित्र यात्रीको चाप र सवारीको सङ्ख्या इत्यादिको अध्ययन गरी कुनै ठाउँमा यातायात सेवा सञ्चालन गर्नु पर्ने आवश्यक देखेमा सो क्षेत्रमा बाटो निर्धारण हुन विभाग समक्ष सिफारिश गर्ने ।

(च) आफ्नो क्षेत्रभित्र यातायात सेवा सुव्यवस्थितरूपमा सञ्चालन गर्न अन्य आवश्यक काम कारवाही गर्ने ।

**१५६. परीक्षा समिति** : (१) सवारी चालक अनुमतिपत्रको लागि दरखास्त दिने व्यक्ति त्यस्तो सवारी चलाउन समर्थ छ छैन भन्ने कुरा यकिन गर्नको लागि दफा ४९ बमोजिम परीक्षा लिन देहायका सदस्यहरू भएको एक परीक्षा समिति रहनेछ :-

(क) प्रमुख, यातायात व्यवस्था कार्यालय - अध्यक्ष

(ख) नेपाल सरकारले तोकिदिएको प्रहरी अधिकृत - सदस्य

(ग) नेपाल सरकारले तोकेको विशेषज्ञ - सदस्य

(२) उपदफा (१) बमोजिमको समितिले चालक अनुमतिपत्रको लागि दरखास्त दिने व्यक्तिहरूको परीक्षा लिई सफल भएकाहरूलाई चालक अनुमतिपत्र प्रदान गर्न अधिकार प्राप्त अधिकारी समक्ष सिफारिस गर्नु पर्छ ।

(३) उपदफा (१) बमोजिमको समितिको बैठक आवश्यकता अनुसार समितिले निर्धारण गरे बमोजिम बस्नेछ ।

(४) उपदफा (१) बमोजिमको समितिले चालकहरूका लागि लिने परीक्षाको विषय र परीक्षा प्रणाली विभागले तोके बमोजिम हुनेछ ।

**१५७. यातायात निरीक्षकको नियुक्ति** : यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियमको अधीनमा रही सवारीहरू चलाएको वा नचलाएको र यातायात सेवामा संलग्न सार्वजनिक सवारीहरूले यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियम बमोजिम पालन गर्नुपर्ने शर्तहरू पूरा गरे नगरेको निरीक्षण गर्न नेपाल सरकारले यातायात निरीक्षक नियुक्त गर्न सक्नेछ ।

**१५८. यातायात निरीक्षकको काम, कर्तव्य र अधिकार** : यातायात निरीक्षकको काम, कर्तव्य र अधिकार देहायबमोजिम हुनेछ :-

(क) यातायात सेवामा संलग्न सार्वजनिक सवारीले बाटोको इजाजतपत्र प्राप्त बाटोमा यातायात सेवा सञ्चालन गरे नगरेको निरीक्षण गर्ने ।

(ख) यातायात सेवामा संलग्न भएका सार्वजनिक सवारीहरूले निर्धारित सीट तथा वजन क्षमताका अधीनमा रही यात्री राख्ने तथा मालसामान लाद्ने कार्य गरे नगरेको निरीक्षण गर्ने ।

(ग) यातायात सेवामा संलग्न सवारीहरूले समय समयमा यस ऐन बमोजिम गर्नु पर्ने जाँचपास गराए नगराएको तथा त्यसरी सञ्चालित सेवा पञ्जीकृत भए नभएको जाँच गर्ने ।

(घ) चालक, परिचालकको अनुमतिपत्र तथा यात्रीसूची हेर्ने र यात्रीको टिकट जाँची निर्धारित भाडादर बमोजिम भाडा लिइएको नलिइएको तथा निर्धारित गतिमा सवारी चलाइएको नचलाइएको कुराको निरीक्षण गर्ने ।

(ङ) यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियमको पालन चालक, परिचालक, सवारी धनी वा व्यवस्थापकले गरेको छ छैन भन्ने कुराको समय समयमा निरीक्षण गर्ने ।

**१५९. प्रशिक्षण केन्द्र, कारखाना तथा वर्कसप सञ्चालन गर्न अनुमति लिनुपर्ने** : (१) कुनै पनि किसिमको सवारी चलाउने प्रशिक्षण कार्य सञ्चालन गर्न वा चालक

प्रशिक्षण केन्द्र वा बस, ट्रकको बडी निर्माण गर्ने कारखाना वा अटोमोबाइल वर्कसप सञ्चालन गर्न चाहने व्यक्ति, फर्म, कम्पनी वा संस्थाले विभागको अनुमति लिनु पर्छ ।

(२) उपदफा (१) बमोजिमको अनुमति लिन चाहनेले तोकिएको ढाँचामा तोकिएको दस्तुर समेत संलग्न राखी विभागमा दरखास्त दिनु पर्छ ।

(३) उपदफा (२) बमोजिम दरखास्त परेमा त्यस्तो दरखास्त दिने व्यक्ति, फर्म, कम्पनी वा संस्थाले सञ्चालन गर्न खोजेको प्रशिक्षण केन्द्र, कारखाना वा वर्कसप सञ्चालन गर्न सक्छ सक्तैन भन्ने कुराको जाँचबुझ गरी विभागले त्यस्तो प्रशिक्षण केन्द्र, कारखाना वा वर्कसप सञ्चालन गर्न अनुमति दिन सक्नेछ ।

## परिच्छेद-१०

## सजाय सम्बन्धी व्यवस्था

१६०. **दण्ड सजाय** : (१) दर्ताको प्रमाणपत्रमा उल्लेख भए बमोजिमको वास्तविक नम्बर वा प्लेट नराखी अर्कै नम्बर वा प्लेट राखी सवारी चलाउने वा चलाउन लगाउनेलाई अधिकार प्राप्त अधिकारीले छ महीनासम्म कैद वा पाँचहजारदेखि पन्ध्रहजार रुपैयाँसम्म जरिवाना गरी त्यस्तो सवारी जफत गर्नु पर्छ ।

(२) अधिकार प्राप्त अधिकारीले देहायको काम कारवाही गर्ने गराउनेलाई देहाय बमोजिम जरिवाना गर्न सक्नेछ :-

(क) दफा १२, ४५ वा ११७ को विपरीत काम कारवाही गर्ने गराउनेलाई पाँचसय देखि दुई हजार रुपैयाँसम्म ।

(ख) दफा १४, २९, ३९, ७५, ९३, ९६, १२५ वा १२९ को विपरीत काम कारवाही गर्ने गराउनेलाई एकहजार देखि पाँचहजार रुपैयाँसम्म ।

(ग) दफा १५९ को विपरीत काम कारवाही गर्ने गराउनेलाई दुईहजारदेखि दशहजार रुपैयाँसम्म ।

(३) उपदफा (१) वा (२) मा उल्लेख भए देखि बाहेक यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियम वा जारी गरेको आदेशको विपरीत काम कारवाही गर्ने गराउनेलाई अधिकार प्राप्त अधिकारीले दुईसयदेखि एकहजार रुपैयाँसम्म जरिवाना गर्न सक्नेछ ।

(४) दफा १२८ विपरीत हुने गरी काम कारवाही गर्ने गराउने व्यक्तिलाई पच्चीसहजार रुपैयाँसम्म जरिवाना वा पाँच वर्षसम्म कैद वा दुबै सजाय गरी अदालतले त्यस्तो व्यक्तिबाट हानि नोक्सानी पुग्ने व्यक्तिलाई उपयुक्त क्षतीपूर्तिको रकम दिलाउन सक्नेछ ।

(५) दफा १६५ विपरीत हुने गरी काम कारवाही गर्ने गराउने व्यक्तिलाई एकहजार रुपैयाँ जरिवाना वा एक वर्षसम्म कैद वा दुबै सजाय गरी अदालतले त्यस्तो व्यक्तिबाट हानि नोक्सानी पुग्ने व्यक्तिलाई उपयुक्त क्षतीपूर्तिको रकम दिलाउन सक्नेछ ।

✻१६१. **ज्यान मरेमा हुने सजाय** : (१) कसैले सवारी चलाई कुनै मानिसलाई किची, ठक्कर दिई वा कुनै किसिमले सवारी दुर्घटना गराई सवारीमा रहेको सवारी बाहिर जुनसुकै ठाउँमा रहे बसेको कुनै मानिस त्यस्तो दुर्घटनाको कारणबाट तत्कालै वा मुलुकी ऐन ज्यान सम्बन्धीको महलमा उल्लेखित म्यादभित्र मरेमा त्यस्तो कार्य ज्यान मार्ने मनसाय लिई गरेको भए त्यसरी सवारी चलाउने व्यक्तिलाई सर्वस्व सहित जन्मकैद हुनेछ । कसैले ज्यान मार्ने मनसाय लिई त्यस्तो कार्य गरेकोमा ज्यान मर्न पाएको रहेनछ भने त्यसरी सवारी चलाउने व्यक्तिलाई कसुरको मात्रा अनुसार पाँच वर्षदेखि बाह्र वर्षसम्म कैद हुनेछ ।

(२) कसैले कुनै सवारी चलाएबाट कुनै मानिसलाई किची, ठक्कर लागि वा कुनै किसिमले सवारी दुर्घटना भई सवारीमा रहेको वा सवारी बाहिर जुनसुकै ठाउँमा रहे बसेको मानिस त्यस्तो दुर्घटनाको कारणबाट तत्कालै वा मुलुकी ऐन ज्यान सम्बन्धीको महलमा उल्लेखित म्याद भित्र मरेमा त्यस्तो कार्य ज्यान मार्ने मनसाय लिई गरेको नभए तापनि त्यसरी सवारी चलाउँदा कसैको ज्यान मर्न सक्ने ठूलो सम्भावना छ भन्ने कुरा जानी जानी वा लापरवाही गरी सवारी चलाएको कारणबाट सवारी दुर्घटना हुन गई त्यसैको कारणबाट कुनै मानिसको मृत्यु हुन गएको रहेछ भने त्यसरी सवारी चलाउने व्यक्तिलाई कसुरको मात्रा अनुसार दुई वर्षदेखि दश वर्षसम्म कैद हुनेछ ।

(३) कसैको ज्यान मर्न सक्छ भन्ने जस्तो नदेखिएको अवस्थामा कसैले कुनै सवारी चलाउँदा सवारी दुर्घटना हुन गई सवारीमा रहेको वा सवारी बाहिर जुनसुकै

---

✻ पहिलो संशोधनद्वारा संशोधित ।

ठाउँमा रहे बसेको कुनै मानिसको मृत्यु हुन गएको रहेछ भने त्यसरी सवारी चलाउने व्यक्तिलाई एक वर्षसम्म कैद वा दुईहजार रुपैयाँसम्म जरिवाना वा दुबै सजाय हुनेछ ।

(४) चालक अनुमतिपत्र नभएका व्यक्तिले सवारी चलाई उपदफा (१) वा (२) बमोजिमको कसुर गरेमा निजलाई सोही उपदफा बमोजिम हुने सजायमा थप दुई हजार रुपैयाँ समेत जरिवाना हुनेछ ।

तर सर्वश्वसहित जन्मकैद हुनेमा त्यस्तो थप जरिवाना हुने छैन ।

(५) कुनै सवारीको धनी वा सवारीको जिम्मा लिएको व्यक्तिले चालक अनुमतिपत्र नभएको व्यक्तिलाई सवारी चलाउन दिई कुनै मानिसलाई किची, ठक्कर लागि वा दुर्घटना भई सो मानिस मर्न गएमा त्यस्तो सवारी चलाउन दिने व्यक्तिलाई दुई वर्षसम्म कैद हुनेछ ।

✂१६२. **अङ्गभङ्ग भएमा हुने सजाय** : (१) कसैले कुनै सवारी चलाएबाट कुनै मानिसलाई किची, ठक्कर लागि वा दुर्घटना भई सवारीमा रहेको वा सवारी बाहिर जुनसुकै ठाउँमा रहे बसेको मानिसको त्यस्तो दुर्घटनाको कारणबाट अङ्गभङ्ग भएमा त्यस्तो कार्य बदनियतसाथ गरेको भए अन्धो वा नपुंसक मध्ये जुनसुकै कुरा भएपनि त्यसरी सवारी चलाउने व्यक्तिलाई आठ वर्षसम्म कैद र दश हजार रुपैयाँसम्म जरिवाना हुनेछ । सो दुई खत बाहेक अन्य कुनै अङ्ग बेकम्मा भएमा आठ वर्षसम्म कैद र पाँच हजार रुपैयाँसम्म जरिवाना र एउटै किसिमको काम लिने एउटा भन्दा बढी अङ्ग हुनेमा सो मधये एउटा अङ्ग मात्र बेकम्मा भएमा माथि लेखिएको सजायको आधा सजाय हुनेछ । सो खत निको भई काम लाग्ने भएमा त्यस्तो सवारी चलाउने व्यक्तिलाई पाँचहजार रुपैयाँ जरिवाना हुनेछ ।

(२) चालक अनुमतिपत्र नभएको व्यक्तिले सवारी चलाई उपदफा (१) मा उल्लिखित कुनै कसुर गरेमा निजलाई सो उपदफा बमोजिम हुने सजायमा पाँचहजार रुपैयाँ थप जरिवाना हुनेछ ।

(३) कुनै सवारीको धनी वा सवारीको जिम्मा लिएको व्यक्तिले चालक अनुमतिपत्र नभएको व्यक्तिलाई सवारी चलाउन दिई कुनै मानसिलाई किची, ठक्कर लागि वा दुर्घटना भई सवारीमा रहेको वा सवारी बाहिर जुनसुकै ठाउँमा रहे बसेको मानिसको अङ्गभङ्ग भएमा त्यस्तो सवारी चलाउन दिने व्यक्तिलाई दुईहजार रुपैयाँ जरिवाना हुनेछ ।

---

✂ पहिलो संशोधनद्वारा संशोधित ।

१६३. **घा खर्च, कृया खर्च र क्षतीपूर्ति भराई दिने** : (१) सवारी दुर्घटनाबाट कुनै पक्षलाई कुनै पनि किसिमको हानि नोक्सानी पुग्न गएमा पीडित पक्षलाई देहाय बमोजिम घा खर्च र क्षतीपूर्तिको रकम चालक, सवारी धनी वा व्यवस्थापकबाट भराई दिनु पर्छ :-

(क) ज्यान मरेकोमा सो मर्ने व्यक्तिको हकवालालाई कृया खर्च बापत दशहजार रुपैयाँ र क्षतीपूर्ति बापत तेस्रो पक्षको बीमा नगराएको भए यस ऐन बमोजिम तेश्रो पक्षले पाउने दुर्घटना बीमाको रकम ।

(ख) अङ्गभङ्ग भएकोमा निको भइकन पनि काम नलाग्ने भए सो को क्षतीपूर्ति बापत तेस्रो पक्षको बीमा नगराएको भए यस ऐन बमोजिम तेस्रो पक्षले पाउने अङ्गभङ्ग बापतको दुर्घटना बीमाको रकम र त्यस्तो अङ्ग काम लाग्ने भए घा खर्च बापत पाँचहजार रुपैयाँ ।

(२) सवारी दुर्घटनाबाट कुनै व्यक्तिको ज्यान मरेको भए सो मर्ने व्यक्तिको हकवालालाई कृयाखर्च र क्षतिपूर्ति रकम र अङ्गभङ्ग भएको भए सो हुने व्यक्तिलाई घा खर्चको रकम उपदफा (१) बमोजिम ✄प्रमुख जिल्ला अधिकारीले तत्कालै सवारी चालक, सवारी धनी वा व्यवस्थापकबाट भराई दिनु पर्छ ।

(३) उपदफा (१) मा लेखिएदेखि बाहेक चालकले यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियम वा जारी गरेको आदेश बर्खिलाप हुने गरी सवारी चलाई दुर्घटना हुन गई कुनै व्यक्तिलाई चोटपटक लागेमा त्यस्तो व्यक्तिलाई तत्कालै औषधि खर्च बापत ✄प्रमुख जिल्ला अधिकारीले चोटपटकको स्थिति विचार गरी चालक, सवारी धनी वा व्यवस्थापकबाट दुईहजार रुपैयाँसम्म दिलाई दिनु पर्छ । त्यस्तो चोट पटक लाग्ने व्यक्तिले पछि बढी रकम क्षतिपूर्ति पाउने भएमा त्यसरी औषधि खर्च बापत दिएको रकम कट्टी गरी बाँकी पाउने रकम मात्र दिइनेछ ।

(४) यस दफामा माथि जुनसुकै कुरा लेखिएको भए तापनि यस दफा बमोजिम भराइने घा खर्च, कृया खर्च र क्षतीपूर्तिको कूल रकमको पाँच प्रतिशत भन्दा बढी चालकबाट भराइने छैन ।

---

✄ पहिलो संशोधनद्वारा संशोधित ।

(५) उपदफा (१) वा (२) बमोजिम बुझाउनु पर्ने कृया खर्च, घा खर्च र क्षतिपूर्ति रकम चालकले बुझाउनु पर्नेमा निजले बुझाउन नसकी प्रचलित कानून बमोजिम निजको जायजातबाट पनि असूल उपर हुन सकेन भने सो उपर नभए जति रुपैयाँ निजबाट असूल उपर भएको जरिवाना मध्येबाट भराई दिनु पर्छ ।

✚(६) यस दफामा लेखिए बमोजिम बीमा कम्पनीले व्यहोर्नु पर्ने क्षतीपूर्ति बापतको बीमा रकम यथाशीघ्र भराई दिनु पर्नेछ ।

१६४. **यातायात निरीक्षक वा प्रहरीले तत्काल सजाय गर्न सक्ने** : (१) यस ऐनमा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि देहायको कसुर पहिलो पटक गर्नेलाई पच्चीस रुपैयाँदेखि पचास रुपैयाँसम्म, दोस्रो पटक गर्नेलाई पचास रुपैयाँदेखि एकसय रुपैयाँसम्म र तेस्रो पटक वा सो भन्दा बढी पटक गर्नेलाई एकसय रुपैयाँदेखि दुईसय रुपैयाँसम्मको जरिवाना यातायात निरीक्षक वा घटीमा सहायक प्रहरी निरीक्षक दर्जासम्मको अधिकृतले तत्काल गर्न सक्नेछ :-

(क) ट्राफिक सङ्केत वा ईशारा उल्लङ्घन गरी सवारी चलाएको ।

(ख) सवारी अड्याउन निषेध गरिएको ठाउँ वा समयमा सवारी अड्याएको ।

(ग) सवारी मोड्न वा ध्वनि सङ्केत दिन निषेध गरिएको ठाउँमा सवारी मोडेको वा ध्वनी सङ्केत दिएको ।

(घ) सडकमा गलत साइड तर्फबाट सवारी चलाएको ।

(ङ) एकतर्फी सडकमा सो विपरीत सवारी चलाएको ।

(च) अवस्था ठीक नभएको सवारी चलाएको ।

(छ) निर्धारित गतिभन्दा बढी गतिमा सवारी चलाएको ।

(ज) राती बत्ती नबाली सवारी चलाएको ।

(झ) मादक पदार्थ सेवन गरी सवारी चलाएको ।

(ञ) अरूलाई बाधा पुग्ने गरी सार्वजनिक स्थानमा सवारी राखेको ।

✚ पहिलो संशोधनद्वारा थप ।

(ट) सवारी चलाउन निषेध गरिएको ठाउँ वा समयमा सवारी चलाएको ।

(ठ) नम्बर प्लेट नराखी सवारी चलाएको ।

(ड) सवारीको वजनको हद निर्धारण गरिएको ठाउँमा निर्धारित वजनभन्दा बढी वजनको सवारी चलाएको ।

(ढ) पेटी नबाँधी वा हेल्मेट नलगाई सवारी चलाएको ।

(ण) सवारीमा बस्ने वा राख्ने मानिस वा मालसामानको हद निर्धारित गरिएकोमा सो हद भन्दा बढी राखी सवारी चलाएको ।

(त) सार्वजनिक सवारीको चालकले यात्री लिन इन्कार गरेको ।

(थ) निर्धारित भाडा दरभन्दा बढी भाडा लिई सवारी चलाएको ।

(द) लापरवाही साथ सवारी चलाएको ।

(ध) बाटो इजाजतपत्र नलिई सार्वजनिक सवारी चलाएको ।

(न) चालक अनुमतिपत्र साथमा नराखी सवारी चलाएको ।

(२) उपदफा (१) बमोजिम यातायात निरीक्षक वा प्रहरीले गरेको जरिवानाको रकम तत्काल बुझाउन नसक्नेलाई चौबीस घण्टाभित्र त्यस्तो रकम सम्बन्धित प्रहरी कार्यालय वा अधिकार प्राप्त अधिकारी समक्ष बुझाउन पुर्जी दिनेछ ।

(३) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि कसैले उपदफा (१) मा उल्लेखित कसुर गर्दाको बखत निजलाई सजाय गर्न तत्काल घटनास्थलमा घटीमा सहायक प्रहरी निरीक्षक दर्जासम्मको अधिकृत नभएमा पनि घटनास्थलमा रहेको कुनै पनि प्रहरी जवानले त्यस्तो कसुर गर्नेलाई निजले गरेको कसुर खुलाई सो बापत निजलाई हुने जरिवानाको रकम चौबीस घण्टाभित्र सम्बन्धित प्रहरी कार्यालयमा बुझाउन पुर्जी दिनेछ ।

(४) उपदफा (२) वा (३) बमोजिमको पुर्जी दिंदा त्यस्तो पुर्जीको नक्कल प्रतिमा सो पुर्जी बुझ्नेको सही समेत गराउनु पर्छ ।

(५) उपदफा (२) वा (३) मा लेखिएको समयसम्म पनि अधिकार प्राप्त अधिकारी वा सम्बन्धित प्रहरी कार्यालय समक्ष त्यस्तो जरिवानाको रकम

नबुझाउनेलाई अधिकार प्राप्त अधिकारीले एकहजार रुपैयाँसम्म जरिवाना गरी त्यस्तो व्यक्ति चालक भए चालक अनुमतिपत्र, सवारी धनी वा व्यवस्थापक भए सवारीको बाटो इजाजतपत्र वा निजहरूले यातायात सेवा सञ्चालन गर्न प्राप्त अनुमतिपत्र ⌘बढीमा एक महीनासम्मको लागि निलम्बन गर्न सक्नेछ ।

✚(६) उपदफा (५) बमोजिम निलम्बन गरिएको अवधिसम्म पनि जरिवाना नुबझाएमा अधिकार प्राप्त अधिकारीले त्यस्तो चालक अनुमतिपत्र, बाटो इजाजतपत्र वा यातायात सेवा सञ्चालन गर्न प्राप्त अनुमतिपत्र खारेज गर्न सक्नेछ ।

## परिच्छेद-११

## विविध

**१६५. हानि नोक्सानी पुऱ्याउन नहुने** : कसैले सवारीमा रहेका चालक, परिचालक, सुरक्षाकर्मी, सवारीका अन्य कर्मचारी वा यात्रीलाई पिट्ने, सवारी रोक्ने, सवारी तोडफोड गर्ने वा अन्य कुनै किसिमले त्यस्तो सवारी वा सवारीमा रहेका मानिस वा मालसामानलाई कुनै हानि नोक्सानी पुऱ्याउने काम गर्न, गराउन हुँदैन ।

**१६६. सवारी धनी वा व्यवस्थापकले तिर्नु पर्ने** : कुनै चालकले लापरवाही गरी वा बदनियत पूर्वक यो ऐन वा यस ऐन अन्तर्गतको नियम वा आदेशको उल्लङ्घन गरेकोमा बाहेक अन्य अवस्थामा यस ऐन बमोजिम त्यस्तो चालकले तिर्नु पर्ने जरिवाना, घा खर्च, कृया खर्च वा क्षतिपूर्तिको रकम सम्बन्धित सवारी धनी वा व्यवस्थापकले तिरी दिनु पर्छ ।

**१६७. सजाय नहुने** : दफा १६१ र १६२ मा लेखिएको अवस्थामा बाहेक अन्य अवस्थामा चालकको काबू बाहिरको परिस्थितिबाट दुर्घटना भई कुनै हानि नोक्सानी पुग्न गएको रहेछ भने त्यस्तो सवारी चलाउने चालकलाई कुनै सजाय हुने छैन ।

**१६८. प्रतिस्पर्धात्मक ढङ्गबाट यातायात सेवा सञ्चालन गर्ने** : यस ऐनमा अन्यत्र जुनसुकै कुरा लेखिएको भएतापनि स्वच्छ प्रतिस्पर्धात्मक ढङ्गबाट यातायात व्यवसायको विकास गर्नको लागि सार्वजनिक सवारीलाई चक्रप्रणाली अन्तर्गत यातायात सेवा सञ्चालन गर्ने गरी इजाजतपत्र प्रदान गरिने छैन ।

---

⌘ पहिलो संशोधनद्वारा संशोधित ।
✚ पहिलो संशोधनद्वारा थप ।

☛ ..........................

१६९. **निर्देशन दिन सक्ने** : नेपाल सरकार, विभाग वा अधिकार प्राप्त अधिकारीले यातायात व्यवसायीहरूलाई यातायात व्यवसायलाई प्रभावकारी बनाउन तथा यातायात सेवालाई सरल तथा सुलभ बनाउन आवश्यक निर्देशन दिन सक्नेछ । यसरी दिइएको निर्देशनको पालना गर्नु यातायात व्यवसायीको कर्तव्य हुनेछ ।

१७०. **अधिकार प्रत्यायोजन** : यस ऐन बमोजिम विभाग वा अधिकार प्राप्त अधिकारीलाई प्राप्त अधिकारहरू मध्ये कुनै वा सबै अधिकार आवश्यकतानुसार विभाग वा अधिकार प्राप्त अधिकारीले कुनै समिति, अधिकारी, यातायात निरीक्षक वा प्रहरीलाई प्रत्यायोजन गर्न सक्नेछ ।

१७१. **पुनरावेदन** : (१) यस ऐन बमोजिम अधिकार प्राप्त अधिकारी, प्रहरी वा यातायात निरीक्षकले गरेको निर्णय वा सजायको आदेश उपर विभाग समक्ष पुनरावेदन लाग्नेछ ।

(२) यस ऐन बमोजिम विभागले गरेको निर्णय वा आदेश उपर पुनरावेदन अदालत समक्ष पुनरावेदन लाग्नेछ ।

✖१७२. **उजुर गर्ने हदम्याद र पुनरावेदन गर्ने म्याद** : (१) दफा १६१ अन्तर्गतको कसुरको हकमा मुलुकी ऐन ज्यान सम्बन्धीको महलमा उल्लेखित म्यादभित्र, दफा १६२ अन्तरगतको कसुरको हकमा मुलुकी ऐन कुटपीटको महलमा उल्लेखित म्यादभित्र र यस ऐन अन्तरगतका अन्य कसुरको हकमा कसुर भएको मितिले तीस दिनभित्र उजुर गर्नु पर्नेछ ।

(२) दफा १६१ र १६२ अन्तरगतका कसुरका सम्बन्धमा बाहेक यस ऐन अन्तरगतका अन्य कसुरका सम्बन्धमा निर्णय वा आदेशको सूचना पाएको मितिले पैंतीस दिनभित्र पुनरावेदन दिनु पर्नेछ ।

१७३. **सहयोग पुऱ्याउनु पर्ने** : यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियम वा जारी गरिएको कुनै आदेश कार्यान्वयन गर्ने सन्दर्भमा अधिकार प्राप्त अधिकारीले वा यातायात निरीक्षकले कुनै किसिमको सहयोग मागेमा निजहरूलाई त्यस्तो सहयोग पुऱ्याउने कर्तव्य प्रहरी लगायत सम्बन्धित सबैको हुनेछ ।

☛ पहिलो संशोधनद्वारा थप भई सार्वजनिक खरिद ऐन, २०६३ द्वारा खारेज ।

✖ पहिलो संशोधनद्वारा संशोधित ।

१७४. **अन्य सवारी साधनको चालकले यस ऐनको पालन गर्नु पर्ने**: यस ऐन बमोजिम दर्ता गर्न नपर्ने सवारी साधन वा कुनै सवारी साधन चलाउन यस ऐन बमोजिम चालक अनुमतिपत्र लिन नपर्ने रहेछ भने त्यस्तो सवारी चलाउँदा चालकले यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियम वा जारी गरिएको आदेशद्वारा निर्धारित ट्राफिक सङ्केतको पालना गर्नु पर्छ ।

१७५. **असल नियतले गरेको कामको बचाउ** : अधिकार प्राप्त अधिकारी वा निजले अधिकार प्रत्यायोजन गरेको समिति, अधिकारी, यातायात निरीक्षक, प्रहरी कर्मचारी वा सम्बन्धित कुनै कर्मचारीले यस ऐन बमोजिम आफ्नो कर्तव्य पालन गर्दा असल नियतले गरेको काम कारवाहीमा निज व्यक्तिगत रूपमा जवाफदेही हुने छैन ।

१७६. **विशेष अधिकार** : यस ऐनमा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि कुनै सवारीको सम्बन्धमा यस ऐनको कुनै व्यवस्था तोकिएको अवधिसम्म लागू नहुने गरी नेपाल सरकारले छुट दिन सक्नेछ ।

✦१७६क. **नेपाल सरकार वादी हुने** : दफा १६१ र १६२ अन्तरगतको मुद्दा नेपाल सरकार वादी हुनेछ र सो मुद्दा सरकारी मुद्दा सम्बन्धी ऐन, २०४९ को अनुसूची -१ मा परेको मानिनेछ ।

१७७. **बाधा अडकाउ फुकाउने अधिकार** : यस ऐनको कार्यान्वयन गर्दा कुनै बाधा अडकाउ परेमा नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी आदेश जारी गरी त्यस्तो बाधा अडकाउ हटाउन सक्नेछ ।

१७८. **अनुसूचीमा हेरफेर गर्न सक्ने** : नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी अनुसूचीमा आवश्यक हेरफेर गर्न सक्नेछ ।

१७९. **नियम बनाउने अधिकार** : यस ऐनको उद्देश्य पूर्तिको लागि नेपाल सरकारले आवश्यक नियमहरू बनाउन सक्नेछ ।

१८०. **खारेजी र बचाउ** : (१) देहायका ऐनहरू खारेज गरिएका छन् :-

(क) सवारी ऐन, २०२० ।

(ख) राष्ट्रिय यातायात व्यवस्था ऐन, २०२६ ।

(२) उपदफा (१) मा लेखिएका ऐनहरू अन्तर्गत भए गरेका सम्पूर्ण काम कारवाहीहरू यसै ऐन अन्तर्गत भए गरेका मानिनेछन् ।

---

✦ पहिलो संशोधनद्वारा थप ।

**द्रष्टव्य** : केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६३ ले देहायको शब्दको सट्टा देहायको शब्द राखी रूपान्तरण गरेको छ :
"श्री ५ को सरकार" भन्ने शब्दको सट्टा "नेपाल सरकार" ।

# अनुसूची-१

(दफा ३, ४ र ५ सँग सम्बन्धित)

## सवारीको वर्गीकरण

**खण्ड (क)**

ठूलो सवारी (दफा ३ सँग सम्बन्धित) :-

बस, ट्रक, ट्र्याक्टर, दमकल, डोजर, लोडर, डम्फर, क्रेन, रोलर आदि ।

**खण्ड (ख)**

मझौला सवारी ( दफा ४ सँग सम्बन्धित):-

मिनिबस, मिनिट्रक, जीप, पीकअप, भ्यान, क्रेन, ट्र्याक्टर, रोलर आदि ।

**खण्ड (ग)**

सानो सवारी (दफा ५ सँग सम्बन्धित) :-

कार, जीप, भ्यान, पिकअप, मोटर साइकल, स्कूटर, टेम्पो, पावर टिलर आदि ।

# ▲अनुसूची-२

(दफा ६, ७, ८, ९, १० र ११ सँग सम्बन्धित)

**सवारीको प्लेट**

**खण्ड (क)**

सार्वजनिक सवारी (दफा ६ को उपदफा (५) सँग सम्बन्धित) :-

कालो प्लेटमा सेतो अक्षर र अङ्कमा हुनुपर्नेछ ।

[✍]तर अब उप्रान्त बागमती अञ्चलभित्र दर्ता गरी काठमाडौं उपत्यकाको चक्रपथ र चक्रपथ बाहिर भाडामा चलाइने टेम्पो र माइक्रोबसको नम्बर प्लेट सेतो प्लेटमा कालो अक्षर र अङ्कमा राख्नु पर्नेछ ।

**खण्ड (ख)**

पर्यटक सवारी (दफा ७ को उपदफा (२) सँग सम्बन्धित) :-

हरियो प्लेटमा सेतो अक्षर र अङ्कमा हुनु पर्नेछ ।

**खण्ड (ग)**

निजी सवारी (दफा ८ को उपदफा (३) सँग सम्बन्धित)

रातो प्लेटमा सेतो अक्षर र अङ्कमा हुनु पर्नेछ ।

**खण्ड (घ)**

सरकारी सवारी (दफा ९ को उपदफा (२) सँग सम्बन्धित)

सेतो प्लेटमा रातो अक्षर र अङ्कमा हुनु पर्नेछ ।

**खण्ड (ङ)**

संगठित संस्था वा संस्थानको सवारी (दफा १० को उपदफा (२) सँग सम्बन्धित)

पहेँलो प्लेटमा नीलो अक्षर र अङ्कमा हुनु पर्नेछ ।

▲ मिति २०५६।६।३ गतेको नेपाल राजपत्रमा प्रकाशित सूचनाद्वारा अनुसूचीनै हेरफेर ।

✍ मिति २०५७।७।३ गतेको नेपाल राजपत्रमा प्रकाशित सूचनाद्वारा प्रतिबन्धात्मक वाक्यांश थप ।

**खण्ड (च)**

कूटनीतिक सवारी (दफा ११ को उपदफा (२) सँग सम्बन्धित) :-

नीलो प्लेटमा सेतो अक्षर र अङ्कमा हुनु पर्नेछ ।

<u>**द्रष्टव्य**</u> :

⏭१. राष्ट्रपति सवार हुने सवारी साधनको नम्बर प्लेट नेपाल सरकारले तोके बमोजिम हुनेछ ।

➧१क. उपराष्ट्रपति, प्रधानमन्त्री, प्रधान न्यायाधीश, संविधान सभाका अध्यक्ष तथा उपाध्यक्ष र मन्त्रिपरिषद्का सदस्यहरू चढ्ने सरकारी सवारी साधनको नम्बर प्लेटको माथिल्लो आधा भाग र तल्लो आधा भाग क्रमशः रातो र नीलो रङ्गको पृष्ठभूमिमा सेतो रङ्गको अक्षर र अङ्क हुनु पर्नेछ ।

२. सबै किसिमका ठूला तथा मझौला सवारीहरूको नम्बर प्लेटको साईज १४" × ८" साना सवारी मध्ये चारपाङग्रेको नम्बरप्लेटको साइज १२" × ७" तीनपाङग्रे टेम्पो आदिको नम्वरप्लेटको साइज १०" × ७" र दुई पाङग्रे मोटर साइकल, स्कुटर आदिको नम्वरप्लेटको साइज ८" × ५" हुनु पर्नेछ ।

३. नम्बरप्लेटमा लेखिने अक्षर र अङ्क ठूला तथा मझौला सवारीहरूको प्लेटमा कम्तिमा ३ इन्च अग्लो र १/२ इन्च मोटो, सानो सवारीमा चारपाङग्रे तथा तीनपाङग्रे टेम्पो आदिको २ इन्च अग्लो र १/२ इन्च मोटो र मोटरसाइकल, स्कुटर आदिको २ इन्च अग्लो र ३/८ मोटो हुनु पर्नेछ ।

४. नम्बरप्लेटको चारैतिर १/२ इन्च (मोटर साइकल, स्कुटर आदिको प्लेटमा १/४ इन्च छाडेर अङ्क र अक्षर लेख्नु पर्नेछ । अङ्क र अक्षरको बीचको दूरी कम्तीमा पनि १/४ इन्च तथा तल्लो र माथिल्लो लाइनको दूरी कम्तिमा १/२ इन्च पनि हुनु पर्नेछ ।

⏭ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६६ द्वारा संशोधित ।

➧ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६६ द्वारा थप ।

# अनुसूची-३

(दफा १६ सँग सम्बन्धित)

सवारी दर्ता प्रमाणपत्रको ढाँचा

नेपाल सरकार

निर्माण तथा यातायात मन्त्रालय

यातायात व्यवस्था विभाग

........ यातायात व्यवस्था कार्यालय

सवारी दर्ता नं. :-

सवारीको किसिम :-

दर्ता मिति :-

सवारी धनीको नाम, थर :-

वतन :-

सवारी धनीको हस्ताक्षर :- ...

अधिकृतको सही :- ...

सवारी धनीको फोटो

दर्ता गर्ने अधिकारीको

हस्ताक्षर :-

मिति :-

नामसारी भएको मिति ... ...

सवारी धनीको फोटो

सवारी धनीको नाम, थर, वतन :-... ... ...

… … …. …. …. … … … … … …          नामसारी गर्ने अधिकारीको

हस्ताक्षरः-

## प्रमाणपत्रको नवीकरण

| नवीकरण गरेको मिति | नवीकरण म्याद पुग्ने मिति | नवीकरण गर्ने अधिकारीको सही |
|---|---|---|
| | | |

सवारीको विस्तृत विवरण :-

१. कम्पनीको नाम :-

२. सवारीको मोडेल/(साल) :-

३. सिलिण्डर संख्या :-

४. हर्ष पावर/सि.सि. :-

५. चेसिस नम्बर :-

६. इन्जिन नम्बर :-

७. सवारीको रङ्ग :-

८. सीट क्षमता (चालक सहित) :-

९. वजन :-

१०. पेट्रोल। डिजेल :-

११. रेडियो, क्यासेट प्लयर, टेलिफोन आदि छ छैन :-

१२. कुन कम्पनी वा मानिसबाट खरीद गरेको हो सो कम्पनी वा मानिसको नाम :-

१३. प्रयोगः-

१४. चलाउने क्षेत्र :-

१५. भन्सारको निस्सा :-

# अनुसूची-४

(दफा २१ सँग सम्बन्धित)

निर्माण तथा यातायात मन्त्रालय

यातायात व्यवस्था विभाग

यातायात व्यवस्था कार्यालय

पत्रसंख्याः-                                                                                    मितिः-... ... ...

चलानी नं.:- ... ... ... शाखा... ... ...

प्राप्त पत्र संख्या र मितिः-

**विषय** :- अस्थायी नम्बर ।

श्री ... ... ...

उपर्युक्त सम्बन्धमा व्यक्ति/फर्म/कम्पनीले यस कार्यालयमा मिति २० । । मा दिएको निवेदन र सो साथ संलग्न प्रमाणहरूको आधारमा निम्न बमोजिम विवरण भएको सवारी तोकिएको अवधिसम्मको निमित्त अस्थायी नम्बर दिइएको छ ।

१.    सवारी धनीको नाम, थर, वतन :-

२.    दिइएको अस्थायी नम्बर :-

३.    अस्थायी नम्बरको अवधि :-

४.    भन्सारको निस्सा :-

५.    सवारी निर्माता :-

६.    सवारीको किसिम :-

७.    सिलिण्डर संख्या :-

८.    हर्ष पावर सि.सि.:-

९.    चेसिस नम्बर :-

१०.    इन्जिन नम्बर :-

११.    सवारीको रङ्ग :-

१२. सीट क्षमता (चालक सहित) :-

१३. वजन :-

१४. पेट्रोल/डिजेल :-

१५. सवारीको पुरानो प्लेट नम्बर :-

# ❋अनुसूची - ५

(दफा ५० सँग सम्बन्धित)

नेपाल सरकार

HMG of Nepal

**सवारी चालक अनुमतिपत्र**

Driving Licence

फोटो
Photograph

नम्बर :

Number

नाम :

Name

| | |
|---|---|
| जारी मिति : | म्याद समाप्त मितिः |
| Date of Issue | Expiry Date |
| ना.प्र.नं.: | रक्त समूह : |
| Ctz. No. | Blood Group |

पिता/पतिको नामः

Father/Husband

ठेगाना :

Adsress

तपाईलाई निम्न बमोजिमको सवारीहरूको चालक अनुमतिपत्र दिइएको छ :

The Holder of this Licence is authorised to drive the following vehicles.

❋ मिति २०५४।६।६ को नेपाल राजपत्रमा प्रकाशित सूचनाद्वारा अनुसूचीनै हेरफेर ।

| | | | |
|---|---|---|---|
| क.<br>A | मोटर साइकल, स्कुटर, मोपेड<br>Motorcycle, Scooter, Moped | च.<br>F. | मिनिबस, मिनिट्रक<br>Minibus, Minitruck |
| ख.<br>B. | कार, जिप, डेलिभरी भ्यान<br>Car, Jeep, Delivery Van | छ.<br>G. | ट्रक, बस, लहरी<br>Truck, Bus, Lorry |
| ग.<br>C. | टेम्पो, अटोरिक्सा<br>त्भ्रुउय, ब्ातयचष्अपकजब | ज.<br>H. | रोडरोलर, डोजर<br>Road Roller, Dozer |
| घ.<br>D. | पावर टिलर<br>Powertillar | झ.<br>I. | क्रेन, दमकल, लोडर<br>Crane, Fire brigade, Loader |
| ङ.<br>E. | ट्र्याक्टर<br>Tractor | ञ.<br>J. | अन्य<br>Other |

जारी गर्ने अधिकारी

Issued by

सवारी चालकको दस्तखत

Licence holder's signature

| | | | | |
|---|---|---|---|---|
| | | | | |

कारवाई Offences

# अनुसूची - ६

(दफा ६७ सँग सम्बन्धित)

## सवारी परिचालक अनुमतिपत्र

<u>अ. पत्र. नं.</u>

| जारी मिति | म्याद समाप्त मिति |
|---|---|
| | |

kmf]6f]

नामः-

ना.प्र.प.नं.:-

पिता । पतिको नामः-

ठेगाना :-

---

| | |
|---|---|
| तपाईलाई निम्न बमोजिमको सवारीहरूको परिचालक अनुमतिपत्र दिइएको छ। | नेपाल सरकार<br>निर्माण तथा यातायात मन्त्रालय<br>यातायात व्यवस्था विभाग<br>... ...<u>यातायात व्यवस्था कार्यालय</u> |
| (क) बस<br>(ख) मिनिबस<br>(ग) ट्रक | पासपोर्ट नं. :-<br>रगत समूह :-<br>सवारी परिचालकको सहीः- |

(२) ठेगाना :-

(३) कारोवारको मुख्य स्थान :-

(४) सञ्चालन गर्ने सेवाको किसिम :-

(५) धनी/साझेदार/सञ्चालक (मुख्य व्यक्ति) को नाम, थर र दर्जा :-

(६) ठेगाना :-

... ... ...  ... ... ...

(मुख्य व्यक्तिको सही)  (महानिर्देशकको सही)

ठेगाना :-

सवारी धनी वा व्यवस्थापकको दस्तखत :-

सवारीको किसिम :-

क्षमता... ... सवारी नम्बर :-

चेसिस नम्बर :-



नामसारी

२०४ । । को निवेदन र मिति २०४ । । को दर्ताको प्रमाणपत्र अनुसार श्री ... ... ... को नामबाट ... ... बस्ने श्री ... ... को नाउँमा नामसारी गरिएकोछ ।

अधिकारीको दस्तखत :-

मिति :-

| इजाजतपत्र पाएको क्षेत्र (बाटो) | वहाल अवधि | इजाजतपत्र दिने वा नवीकरण गर्ने अधिकारीको दसतखत र मिति |
|---|---|---|
| | | |

# अनुसूची-७

(दफा ७७ सँग सम्बन्धित)

(बाटो इजाजतपत्रको ढाँचा)

नेपाल सरकार

निर्माण तथा यातायात मन्त्रालय

यातायात व्यवस्था विभाग

. . . . . यातायात व्यवस्था कार्यालय

इजाजत दिने अधिकारीको

नामः-

दर्जा :-

दस्तखतः-

मितिः-

चेसिसको लम्बाईः-

इन्जिन नम्बरः-

मोडेल :-

सवारी निर्माण गर्ने कम्पनी वा संस्थाको नाम र ठेगानाः-

बडी तयार गर्ने कारखानाको नाम ठेगानाः-

इजाजत पत्र नंः-

सवारीको किसिम :-

सवारी धनी वा व्यवस्थापकको नाम :-

# अनुसूची-८

(दफा ९३ सँग सम्बन्धित)

(यातायात सेवा सञ्चालन गर्ने अनुमतिपत्रको ढाँचा)

नेपाल सरकार

निर्माण तथा यातायात मन्त्रालय

यातायात व्यवस्था विभाग

फोटो



दर्ता नं.:-

दर्ता मिति :-

सवारी तथा यातायात व्यवस्था ऐन, २०४९ को दफा ९३ अनुसार देहायको सेवा सञ्चालन गर्न यो अनुमतिपत्र दिइएको छ ।

(१) व्यक्ति/फर्म/कम्पनीको नाम :-